




# बौलाहा पोखरी

## दोलखा

संरक्षणमा धर्म, संस्कृति र परम्पराको महत्व

अगाष्ट २००८



तयार गर्ने : डब्लु डब्लु एफ नेपाल / कमल कुमार साम्पाङ्ग (राई)
तस्विर : डब्लु डब्लु एफ नेपाल / कमल कुमार साम्पाङ्ग (राई)
सम्पादन : झमक बहादुर कार्की (राष्ट्रिय निकुञ्ज तथा वन्यजन्तु संरक्षण विभाग)
भवानी शंकर डंगोल (डब्लु डब्लु एफ नेपाल)



नेपाल सरकार
वन तथा भू-संरक्षण मन्त्रालय

# वन विभाग



४-२२७५७४
४-२२०३०३
४-२२१२३१
४-२१६३७९
४-२२१७६४
फ्याक्स : ४-२२७३७४

(कृपया पत्रोत्तरमा प्राप्त पत्र संख्या र मिति उल्लेख गर्नुहोला ॥

बबरमहल,
काठमाडौं, नेपाल

प्राप्त पत्र संख्या र मिति :-
पत्र संख्या :-
च.नं. :-

## दुई शब्द

सिमसार स्वच्छ जलसम्पदाको लगि एक महत्वपूर्ण स्रोत हो । विभिन्न वन्य जन्तु तथा वनस्पति प्रजातिहरुको वासस्थान, पानी तथा विभिन्न स्रोतहरुको भण्डार भई पारिस्थितिक प्रणाली सन्तुलनको लागि पनि सिमसार अत्यन्तै महत्वपूर्ण हुन्छ । विशेष गरी स्थानीय बासिन्दा तथा समुदायहरुको लागि सिमसारहरु जीवनको एक अभिन्न अंगको रुपमा रहिआएका हुन्छन् । नेपालमा हजारौंको संख्यामा पोखरी, ताल-तलैया, कुण्ड आदि सबै किसिमका साना-ठूला सिमसारहरु छरिएर रहेका छन् । धार्मिक तथा सांस्कृतिक रुपमा यी सिमसारहरु अझ बढि महत्वपूर्ण रहिआएका छन् । यी सिमसारहरुको संरक्षण तथा सम्वर्द्धन गर्नु हामी सबैको दायित्व हो ।

डब्लु.डब्लु.एफ. नेपालले विगत केहि वर्ष देखि राष्ट्रिय निकुञ्ज तथा वन्य जन्तु संरक्षण विभाग संग समन्वय गरि संरक्षण क्षेत्र भित्र रहेका उच्च हिमाली क्षेत्रमा रहेका महत्वपूर्ण सिमसारहरुको विस्तृत अध्ययन गर्दै आएको र यसैको सिलसिलामा संरक्षण क्षेत्र भन्दा बाहिर रहेका उच्च हिमाली सिमसारहरुको अध्ययन गर्ने क्रम अन्तर्गत यो अध्ययन शुरु भएको छ । यस पुस्तिकाको प्रकाशनले उच्च हिमाली सिमसारहरुको धार्मिक, सांस्कृतिक र परम्परागत महत्वको बारेमा चेतना जगाउनुको साथै यी महत्वपूर्ण सिमसारहरुको संरक्षण कार्यमा बलियो टेवा पुग्ने र दिर्घकालिन व्यवस्थापनमा समेत सहयोग पुग्ने कुरामा विश्वस्त छु ।

यस किसिमका अध्ययन र अनुसन्धानका कार्यहरुलाई भविष्यमा पनि निरन्तरता दिंदै हिमाली क्षेत्रमा अवस्थित ओझेलमा परेका महत्वपूर्ण धार्मिक तथा सांस्कृतिक महत्वका सिमसार स्थलहरुलाई जनसमक्ष प्रस्तुत गर्दै लगिने छ ।

अन्त्यमा, यस अध्ययन कार्यमा संलग्न सबै अनुसन्धानकर्ताहरुलाई हार्दिक धन्यबाद दिन चाहन्छु ।

डा. केशवराज कणेल
महानिर्देशक
वन विभाग




नेपाल सरकार
वन तथा भू-संरक्षण मन्त्रालय
राष्ट्रिय निकुञ्ज तथा वन्यजन्तु संरक्षण विभाग
(................................................ शाखा)

फोन नं.: ४२२०८५० | ४२२०९१२ | ४२२७९२६
फ्याक्स नं. ४२२७६७५





संकेत नं.:-
पत्र संख्या :-
चलानी नं. :-

पो. ब. नं. - ८६०
बबरमहल, काठमाडौं
Email: dnpwc@bdcin.wlink.com.np
http//:www.dnpwc.gov.np


## दुई शब्द

स्वच्छ पानीको श्रोतलाई संरक्षण गर्नु नेपाल सरकारको प्रमुख दायित्व अन्तर्गत पर्दछ । सिमसारको संरक्षणको लागि राष्ट्रिय सिमसार नीति, २०५९ लगायत सिमसारको जैविक विविधता संरक्षण, पानीको उपयोग र पानीमा आश्रित जलचरको खेतीलाई व्यवस्थित गर्ने विभिन्न ऐन र नियमावलीहरु हाल कार्यान्वयनमा छन् । राष्ट्रिय सिमसार नीतिमा संरक्षण हिसावले संरक्षित क्षेत्र वा वन क्षेत्र भित्र रहेका सिमसारहरुलाई सरकारद्वारा संरक्षण गर्ने भनी एकिन गरिएपनि सार्वजनिक स्थानमा रहेका सिमसारहरुलाई जनताद्वारानै संरक्षण गर्ने एकिन गरिएको छ ।

विश्वमा स्वच्छ पानीको हाहाकार भईरहेको अवस्थामा हिमाली भेगका पानीका श्रोतमा धनी नेपालले त्यहाँका ताल, कुण्ड र पोखरी आदिको सर्वेक्षण गरी ती श्रोतमा निर्भर जनता र जैविक विविधताको संरक्षण तथा ती श्रोतको शुद्धतामा निर्भर तल्लो नदीतटिय जनताको हित संरक्षणको लागि महत्वपूर्ण कार्य भइरहेको छ । यो सर्वेक्षण कार्यमा डब्लु डब्लु एफ नेपालले सहयोग गर्दै आएको तथा यस विभागले प्राविधिक समन्वय गर्दै आएको छ । यी सर्वेक्षण कार्यहरुबाट प्राप्त नतिजालाई आधार मानी नेपाल सरकारले गरेको अनुरोधलाई आत्मसात गर्दै रामसार सचिवालयले हिमाली क्षेत्रका रारा, फोक्सुण्डो, गोसाइकुण्ड र वरिपरिका तालहरु तथा गोक्यो र वरिपरीका तालहरुलाई अन्तराष्ट्रिय महत्वको सिमसारको सुचिमा समावेश गरी सकेको छ । यी संरक्षित क्षेत्र वाहिर अवस्थित तालहरुको संरक्षण र सदुपयोगको क्रमलाई यो कार्यले सघाउ पुऱ्याउने विश्वास लिएको छु ।

धार्मिक, सांस्कृतिक, ऐतिहासिक, चरिचरन, पर्यटन, जडीबुटी संकलन र सदुपयोग जस्ता दैनिक सरकोकार र जीविकोपार्जनसंग सम्वन्धित विषयवस्तुका पुस्तिकाहरुको नेपालीमा प्रकाशनबाट स्थानीय स्तरमा संरक्षण र सदुपयोगमा सहयोग पुग्नुको साथै जैविक विविधता संरक्षणमा महत्वपूर्ण सहयोग पुग्ने मैले अपेक्षा राखेको छु ।

डा. अन्नपूर्ण नन्द दास
महानिर्देशक

# राष्ट्रिय प्रतिनिधिको सन्देश

सिमसार पारिस्थितिक प्रणालीको एक महत्वपूर्ण अंग हो । सिमसारले पानीको भण्डारण र स्वच्छीकरण गर्ने, स्थानिय वासिन्दाहरुलाई विभिन्न प्रकारका श्रोत उपलब्ध गराउने, विभिन्न दुर्लभ वन्यजन्तु एवं वनस्पतिलाई वासस्थान प्रदान गर्ने र धार्मिक, सांस्कृतिक, ऐतिहासिक तथा पर्यटकिय स्थलको रुपमा अतुलनिय भूमिका निर्वाह गरेको हुन्छ ।

नेपाल अनेकौं महत्वपूर्ण सिमसारको धनी राष्ट्र भएता पनि अझै यी सिमसारहरुको खोज र महत्वको विश्लेषण हुन बाँकी नै रहेको छ । तराईको कतिपय सिमसारको सर्वेक्षण तथा अनुसन्धान भई दस्तावेजहरु तयार भैसकेको छ, तर पहाडी क्षेत्रमा अवस्थित धेरै जसो सिमसारहरुको अवस्थाबारे हामी अनभिज्ञ छौं । यही जानकारीको कमिलाई परिपूर्ति गर्न डब्लु डब्लु एफ नेपालको स्वच्छ जल सम्पदा कार्यक्रम अग्रसर भएको छ ।

स्वच्छ जल सम्पदा कायक्रमले हाल उच्च हिमाली क्षेत्रमा रहेका सिमसारहरुको विवरण तयार गर्ने क्रम अगाडी बढाएको छ । यसै सन्दर्भमा प्रस्तुत पुस्तिकाले परम्परागत रुपले जीवन यापन गर्दै आएका आदिवासी जनजातीहरुले धार्मिक, ऐतिहासिक र सांस्कृतिक आस्था एवं विश्वासका आधारमा ती क्षेत्रका संरक्षण तथा उपयोग गरेको जिवन्त उदाहरणहरु प्रस्तुत गरेको छ ।

यो अनुसन्धान अगाडी बढाउन प्राविधिक रुपले सहयोग गरिदिनु भएकोमा वन विभाग, राष्ट्रिय निकुञ्ज तथा वन्यजन्तु संरक्षण विभाग र आर्थिक सहयोग गरिदिनु भएकोमा डब्लु डब्लु एफ नेदरल्याण्ड्स/डब्लु डब्लु एफ ईन्टरनेशनल र डब्लु डब्लु एफ युके प्रति डब्लु डब्लु एफ नेपाल हार्दिक कृतज्ञता ज्ञापन गर्दछ ।

अन्त्यमा यस किसिमको विवरण संकलन र सो को प्रकाशनबाट अन्य क्षेत्रका सिमसारहरुको संरक्षण, सम्बर्धन र वुद्धिमत्ता उपयोग गर्न सघाउ पुऱ्याउने छ भन्ने मैले अपेक्षा गरेको छु ।

Manandhar

अनिल मानन्धर
राष्ट्रिय प्रतिनिधि
डब्लु डब्लु एफ नेपाल

**"मनकामना माईले ईच्छ्याएको कुरा पुरा हुने किंम्वदन्ती झैं बौलाह पोखरीले चिताएको मनोकांक्षा पुरा गरिदिने विश्वास रहेछ ।"**



उच्च भौगोलिक अवस्थामा रहेको ऐतिहासिक, सांस्कृतिक, धार्मिक हिमसार (हिमालयन सीमसार) जस्तैः- पोखरी, ताल, तलैया, कुण्ड र मौलिक परम्पराले जैविक विविधता संरक्षणमा पुऱ्याएको योगदान बारे अनुसन्धानका क्षेत्रहरु मध्ये बौलाह पोखरी एक थियो । कार्ययोजना अनुरुप बौलाह पोखरीबारे जानकारी लिने दौरानमा दोलखा जिल्लाका समुदायहरुसंग छलफल गरिएको थियो । बौलाह पोखरी आलम्पु गा.वि.स. दोलखा, गौरीशंकर हिमालको उत्तर पश्चिम क्षेत्रमा पर्दछ भन्ने कुरा समुदायहरुले बताउनु भएको थियो ।

समुन्द्र सतह देखि ४,000 मीटर भन्दा पनि ज्यादा उचाई र तिब्बतका सीमानासम्म फैलिन पुगेको आलम्पु गा.वि.स.मा आदिम कालदेखि बसोबास गर्ने थामी समुदायहरु बस्दारहेछन् । थाङमीद्वारा "थामी" नामाकरण गरिएको तर आफ्नो शाब्दिक जात थाङमी भएको थामी समुदायहरुको भनाई रहेको छ । त्यसो त मार्क टुपिन र स्नाईडरम्यानले पनि थाङमी शब्दलाई प्राज्ञिक स्तरमा स्थापित तथा प्रचलन ल्याउनु भएको तथ्य पाइन्छ ।

**दोलखा**

मध्यमाञ्चल विकाश क्षेत्र, जनकपुर अञ्चलको हिमाली जिल्ला "दोलखा" । दोलखा जिल्ला आर्थिक, सांस्कृतिक, राजनैतिक तथा धार्मिक रुपले प्राचिन कालमा नै

प्रख्यात रहेको कुरा इतिहासमा अध्ययन गर्न पाइन्छ । “दोलखाको परिचय बिनाको नेपालको इतिहास लेख्न पुरा हुँदैन” स्व. शिरोमणि बाबु राम आचार्य ।

दोलखा जिल्लाको पुरानो नाम “अभयपुर” रहेछ । मल्ल र लिच्छवि काल पूर्व नै यस अभयपुर हुँदै कुती, भोट जाने परम्परा भएको अध्ययन गर्न पाइन्छन् । अभयपुरको नाम कसरी “दोलखा” रहन गयो भन्ने विषयमा विभिन्न  किंवदन्तीहरु पाइँदोरहेछ । आदिमकाल देखि भोट या तिब्बतसंग छिमेकी भएको हुँदा तिब्बती भाषामा ‘दो’ भनेको ढुँगा ‘ल’ भनेको मन्दिर र ‘खा’ भनेको घर अर्थ लाग्दो रहेछ । परापूर्वकालमा नै अभयपुरमा प्रसस्त ढुँगाले निर्मित मन्दिर र घरहरु भएको हुनाले दोलखा भन्ने नामाकरण भएको भनाई रहेछ । वर्तमान अवस्थामा पनि ढुँगा माटोले बनाएको घर, मन्दिर, पाटी र पौवाहरु देख्न पाइन्छ ।

अर्को किंवदन्ति अनुसार भारत वर्षबाट एक समयमा एक योगी मुसलमानहरुको आक्रमणबाट भागेर गौरीशंकर हिमालको गुफामा आई तपस्या गर्न थालेछन् । यसरी योगी आई तपस्या गरिरहेको कुरा शंकर (शिवजी) भगवानले थाहा पाउनु भएछ । योगीले आफ्नो गुफामा बसी ध्यान गरिरहेको हुनाले शिवजी (शंकर) ले प्रसन्न हुँदै उक्त योगीलाई वरदान दिनु भएछ । शंकर भगवानको वरदान पाएर अत्यन्तै खुशी हुँदै योगीले यो पवित्र क्षेत्रको भ्रमण गरी आउने मनसायले उक्त गुफाबाट हिंडेछन् । उसले दुई लाख पल्ट घुमे पनि उहि ठाउँमा आईपुगेपछि उसले “दो-दुई र लख-लाख अथवा दो+लाख” दोलखा राखेको भनाई रहेछ ।

धार्मिक मान्यता, सांस्कृतिक संहिष्णुताले गर्दा यस गौरीशंकर हिमाल आरोहणका लागि अनुमति छैन् । परापूर्वकालको अभयपुर आजको दोलखामा १४ शताब्दी पूर्व किरांतीहरुले राज्य चलाएको भन्ने तथ्य पाइन्छ । किरांती छाप वरिपरि उनीहरुको दरवार रहेको अनुमान गर्न सकिन्छ । अझै पनि केहि भग्नावशेषहरु पाइन्छन् रे ।

यसरी ऐतिहासिक महत्व अंगालेको दोलखा जिल्ला आफ्नो आदिम कालदेखि विभिन्न जातजातीहरुको साझा थलोको रुपमा रहेको पाइन्छ । जस्तै :- क्षेत्री, तामाङ, ब्राम्हण, नेवार, थामी (थाङमी), शेर्पा, कामी (दलित), जिरेल, दमाई (दलित), मगर, सार्की (दलित), सुनुवार, गुरुङ, योगी, माझी, भुजेल, सुरेल र अन्य । त्यसैगरी ७१.७१ प्रतिशत नेपाली, १५.०३ प्रतिशत तामाङ, ७.२३ प्रतिशत थामी (थाङमी), ५.७३ प्रतिशत शेर्पा, २.१८ प्रतिशत जिरेल, १.७५ प्रतिशत नेवार, १.०७ प्रतिशत सुनुवार र अन्य २.५३ प्रतिशत भाषा बोल्ने जाती, जनजाती आदिवासी रहेको तथ्यांक पाइन्छ ।

दोलखा जिल्ला भरी हिन्दु धर्मालम्बीहरुको ७१.०५ प्रतिशत, बौद्ध २८.५९ प्रतिशत र अन्य धर्म मान्नेहरुको ०.३६ प्रतिशत देखिन्छ । यसरी दोलखा जिल्ला भौगोलिक, भाषिक, जातीय, सांस्कृतिक र धार्मिक विविधताको धनी जिल्लाहरु मध्येकै एक मान्न सकिन्छ ।

## सीमसार क्षेत्रहरु :-

सदावहार अथवा वर्ष भरी हिउँ परिरहने २.६४ प्रतिशत र ३.२९ प्रतिशत पानी दोलखा जिल्लामा पर्दछ । तिब्बतको सीमानामा उत्पति भई उच्च हिम श्रृखंलाहरु पार गरी बग्ने तामाकोशी, भोटेकोशी जस्ता नदीहरु आफ्ना सहायक खोला (रोलवालिङ, सिंगटी, दोल्ती, गुमु, गोपी, ध्याङ, अँधेरी, चर्नावती, खिम्ती) हरु स्वच्छ पानीका सीमसार क्षेत्रहरु हुन् ।

हिम-पोखरीहरु अर्थात हिमालयन सीमसार क्षेत्रहरु हुन् । भोटेकोशी नदि कम्मरमा डोरी बाँधी खेलीने पौडीबाजहरुको लागि विश्वमा नै प्रख्यात छ । विश्वभरी यस्ता १0 वटा नदीहरु रहेको तथ्यांक पाइन्छ । त्यस्ता नदीहरु मध्ये हिमनदी भोटेकोशी अति सुन्दर भनी त्यस्ता पौडी पारखीहरु हजारौंको संख्यामा वर्षेनी आउने गरेको कुरा स्थानीय वासिन्दाहरुले बताए ।

संसार सृष्टि दाता भगवान “शंकर” र जननी पार्वती “गौरी” को बासस्थान पवित्र हिमाल गौरीशंकर विश्वकै अनुपम हिम श्रृखंला हुन् । हुनत अन्य नाम नखुलेका त्यस्ता क्षेत्रहरु त थुप्रै रहेको कुरा प्रत्यक्षदर्शी स्थानीय बासीहरु बताउँछन् । त्यस्ता विश्व प्रख्यात हिमसार क्षेत्रहरु अन्तरराष्ट्रिय महत्वको रुपमा सुचीकृत गर्नु पर्ने देखिन्छ । भगवानले वास गरेको विश्व चर्चित क्षेत्र भएका प्रमुख दोलखाको परिचय विनाको नेपाली इतिहास खल्लो हुन्छ भनी इतिहासकारहरु भन्नुहुन्छ ।







## दोलखा जिल्लाका केहि महत्वपूर्ण क्षेत्रहरु

गौरीशंकर हिमाल, च्छोरोल्पा ताल, दुधपोखरी, वौलाह पोखरी, शैलुङ डाँडा, कालीञ्चोक, लामा बगर र बेदिङ गाउँ आदि भौगोलिक रुपले महत्वपूर्ण क्षेत्रहरु पर्न आउने रहेछ। त्यसै गरी विगु गुम्बा, कालीञ्चोक भगवती, भीमेश्वर मन्दिर जस्ता धार्मिक सांस्कृतिक महत्वका स्थलहरु दोलखा जिल्लाकै सम्पदा रहेछन्।

दोलखा, राङराङथली आफ्नो आदिमथलो भनी थामी जातीहरु विश्वास गर्दारहेछन्। आलम्पु, लापिलाङ, थामीचागु, टङापा (दोलखा), चोकती, पिस्कर (सिन्धुपाल्चोक) र डढुवा (रामेछाप) थामी जातीहरुको जनघनत्व ज्यादा रहेको जिल्ला र गा.वि.स.हरु पर्दोरहेछ। त्यसो त अन्य जिल्लाहरुमा पनि आफ्नो वंशजहरु छरिएर बसोबास गरेको कुरा उनीहरु बताउँदछन्। आमाको थर छोरीमा र बाबुको थर छोरामा रुपान्तर हुने सांस्कृतिक परम्परा थामी समुदायमा रहेछ। परम्परागत रुपमा चलिआएको धर्म, संस्कार, रिती थिती र अधिकांश मौलीक भाषा बोल्ने थाङमी जातीहरु विशेष गरी किराँत जातीहरुको एक मुख्य हाँगा (वंशज) भएको विश्वास गर्दा रहेछन्। विक्रम सम्वत् २०५८ सालमा गरिएको जनगणना अनुसार थामी भाषा बोल्नेहरुको संख्या ०.०८ प्रतिशत देखिन आउँछ।

## धर्म संस्कार, संस्कृति र हिमसार बौलाह पोखरी



दोलखा जिल्लामा अति रमणीय गा.वि.स.हरु मध्ये आलम्पु गा.वि.स.पनि एक रहेछ। छिमेकी राष्ट्र चीनका सीमानासम्म फैलिएको आलम्पु गा.वि.स. प्राकृतिक, धार्मिक, सांस्कृतिक र भौगोलिक महत्व क्षेत्र रहेछ। प्राकृतिक तथा जैविक स्रोतका धनी आलम्पु गा.वि.स. मा ९५ प्रतिशत भन्दा ज्यादा थामी जातीको बसोबास पाइन्छ। उक्त गा.वि.स. मा एक परिवार खड्का, २-३ घर दलित र केहि शेर्पा समुदायहरु रहेको कुरा सामुहिक स्रोत नक्सा मा चित्रण गरिएको छ।

भौगोलिक सुन्दरता, धार्मिक, सांस्कृतिक तथा जैविक महत्वका हिमालयन सिमसार बौलाह पोखरी आलम्पु गा.वि.स.को उत्तरी क्षेत्रमा पर्ने भएकोले उपरोक्त अध्ययनको लागि यस गा.वि.स. लाई छानिएको थियो। २०६४ साल भाद्र महिनामा थामी जातीहरुको बाहुल्य रहेको उक्त क्षेत्रमा बौलाह पोखरीको धार्मिक, सांस्कृतिक महत्व र जैविक विविधता संरक्षण बारे सामुहिक छलफल गरिएको थियो।

छलफलकै क्रममा थामी समाजका पुरानो पुस्ताका व्यक्तिहरुले उहाँहरु पनि किराँत जातीकै एक हाँगा (वंशज) हो रे भन्ने कुरा बताउनु भयो। किराँत जातीकै हांगा (वंशज) भएको भन्ने त्यस्तो कथन अथवा सत्यता के रहेछ भनी जान्ने जिज्ञासा राख्दा बाबु-बाजेले आफुहरुलाई दन्त्य कथाको रुपमा भनीदिनु भएको मौलिक कहानी हो भन्दै थामी बृद्धहरु भन्नुहुन्छ-

**"हामी थामी जातीहरु पनि किराँतकै एक हाँगा (वंश) हौ रे । हामी सानो छँदा बाजेहरुले कथाको रुपमा हामी कसरी थामी बन्न पुग्यौ भन्ने कुरा भन्ने गर्नुहुन्थ्यो ।"**

पहिलाको भनाई सम्फदै थामी बृद्धहरु अगाडि भन्नुहुन्छ-

**"आदिम, ढुंगे अथवा घुमन्ते युगमा हामी किराँत जाति थियौ । घुमन्ते युगको अन्त्यतिर आएर आ-आफ्नो क्षेत्र बनाएर बस्ने संस्कारको सृजना भएदेखि विभिन्न जाती जस्तै :- थाङमी, सुनुवार, राई, लिम्बु भनी छुट्टिन गएको होला ।"**

आफ्नो जात थामी को उत्पत्ति बारे वृद्ध थामीहरु आफ्नो पुर्ख्याउली दन्त्य कहानी यसरी सुनाउनु हुन्छ-

**"परापुर्व कालमा सप्तकोशीको किनार-किनार हुँदै आफ्नो दिन चर्या बिताउने क्रममा किराँत जातीहरु केहि चाँहि सुंगुरको बच्चा बोक्दै सुनकोशी र दुधकोशीका किनार लागेछन् रे । एक भाइ चाँहि बाख्राका पाठा दोऱ्याउदै भोटेकोशी पसेछन् । त्यस समयमा आस-पासमा अति घना जंगल भएको र हिंस्रक जंगली जनावर रहेको कुराहरु हाम्रा पुर्खाहरुद्वारा सुन्न पाइन्थ्यो । घना जंगल, हिंस्रक जनावरका बावजुत पनि हाम्रा पुर्खाले यस भोटेकोशी आसपासमा आफ्नो बसोबास बनाएछ रे । उता सुनकोशी, दुधकोशीको किनार हुँदै गएकाहरुले पनि रमणीय, राम्रो उब्जनी हुने, पशुपालन पनि राम्रो हुने, घमाइलो क्षेत्र पाएछन् । एकपल्ट उनीहरु भोटेकोशी किनारमा रहेका आफ्ना एक्लै भाई भेट्न भनी आएछन् रे । यस्तो घना जंगल भएको ठाउँमा बस्नु राम्रो हुन्न । एक्लै बस्नु असल होइन् । जंगली जनावर देखि खतरा हुन् सक्छ, उता नै जाउँ भनी हाम्रा पुर्खालाई, सुनकोशी र दुधकोशी तर्फबाट आएका वंशहरुले अनुरोध गरेछन् रे । जति जिद्धी गरे पनि हाम्रा पुर्खाले नमाने पछि यस्तो एकान्त घना जंगल र हिंस्रक जन्तुहरु भएको ठाउँमा नबस् भन्दा नमान्ने अब यस्तो क्षेत्रमा राम्ररी थामेर खानु भनी उनीहरु फर्केछन् रे । त्यसरी उनीहरुले छाडेर गएको शब्द (थामेर खानु) बाट हाम्रा पुर्खाको जात थामी रहन गएको र हामी थामी भएको पुर्ख्यौली कहानी छ ।"**

हाम्रा पुर्ख्यौलीहरुले भन्नु भएको कुरा सत्य हुन सक्छ, किनकी हाम्रा थामी समाजमा बाखा पाल्ने र धर्म, कर्म संस्कार आदिमा पनि बाखा चढाउने परम्परा छ। हाम्रा पुर्खाले पूर्व जाने किराँती दाजु भाईहरुसंग छुट्टिएर आउने क्रममा दोऱ्याएर ल्याउनु भएको बाखाकै सन्तान अफ्रैसम्म हुनुपर्छ। हाम्रो देवी-देवतालाई तिनै बाखाका बोका बली चढाई पुजा-आजा गर्ने धार्मिक परम्परा छ। त्यसो नगरे गाउँघरमा रोग फैलने, मौसम राम्रो नहुने, पशुधन हानी हुने पुरानो चलन भएको हुनाले पनि हामी थामी समाजलाई बाखा नै चाहिन्छ। धर्म, कर्म, रितिरिवाज मान्न कै लागि पनि बाखा पालन गर्नु पर्छ। त्यसो त राम्रो भएमा बेच्न पनि सकिन्छ भन्नु हुन्छ, थामी बुढापाकाहरु। आफ्नो जात

यसरी थामी रहन गएको पुर्ख्यौली भनाई सुनाउदै सहभागी वृद्धहरु भन्नुहुन्छ-

> **“हाम्रा पुर्खासंगै छुट्टिएर दुधकोशी र सुनकोशी किनारतर्फ गएका किराँतीहरुले चाँहि बुच्चे सुंगुर साथमा लिएर गएका थिए रे । त्यसैले हुनुपर्छ, उनीहरुको धर्म, कर्ममा सुंगुर चढाउने प्रचलन छ ।”**

घुमन्ते युगदेखि मानव विकास हुँदै जाँदा आफ्नो जातीको नामाकरण हुन गएको पाईएको छ। आदिम युगदेखि मानवीय व्यवहारमा आएका पशु, वनस्पति र जंगल आदिको उपयोग घरपालुवाको रुपमा स्थापित गर्ने र केहिलाई जंगली अवस्थामा नै संरक्षण गर्ने परम्परा रहेको हुनसक्ने कुरा माथि उल्लेखित किंवदन्तिद्वारा बुझ्न सकिन्छ।

थामी बुढापाकाहरु आफ्नो पुर्खाहरुले कथाको रुपमा भनी राख्नु भएका कुराहरु सम्झदै भन्नुहुन्छ-

> **“हाम्रा पुर्खाहरुका भनाई अनुसार जिजुवाजे वा पित्री पुर्खालाई यो भोटेकोशीकै किनार मन परेछ रे । किन भने त्यस बखत अति घना जंगलमा कन्दमुल प्रसस्त पाइने, भोटेकोशी लगायतको खोला, खोल्साहरुका किनारमा पाइने स्वादिलो माछा, बाख्रा लगायत अन्य पशुपालन सहज हुने रहेछ । यसरी नै हाम्रो थामी समाजको विकास भएको हो ।”**

अर्को भनाई अनुसार आदिम कालमा आफ्ना पुर्खाहरु घुमन्ते-फिरन्ते जीवन विताउने क्रममा आजको थानकोटमा आई बसोबास गर्न थालेछन् रे। थानकोटको पुरानो नाम “थामकोट” थियो रे। पछि उक्त शब्द अपभ्रष्ट भई थानकोट भएको भनाई रहेछ। घुमन्ते जीवन शैली त्यागी थामकोटमा बसोबास गर्न थालेका हुनाले उसै ठाउँको नामबाट हाम्रो जाती थामी रहन गएको कुरा एक थरी थामी वृद्ध विश्वास गर्दा रहेछन्। थामकोटमा बसोबास रहेकै समयमा शत्रुले हाम्रा पुर्खाहरु माथि आक्रमण गरेछन्। शत्रुद्वारा पराजय भएपछि हाम्रा पुर्खाहरु काठमाडौं, भक्तपुर, बनेपा हुँदै दोलखामा बसोवास गरेको भन्ने मौलिक कहानी पनि थामी समाजमा रहेछ।

कन्दमुल खोज्दै, शिकार खेल्दै, घुमन्ते-फिरन्ते जीवन शैली बदल्दै दोलखा जिल्ला आफ्नो पुर्ख्यौली थलो हुन गएका थामी जातीहरु परम्परागत धर्म, संस्कृति मान्दा रहेछन्। आज पनि उनीहरु सादा (सरल) जीवन मनपराउने, प्रकृतिसंग नजिक भएर बस्न मन पराउने स्वभाव रहेको तथ्यहरु आलम्पु गा.वि.स.मा गरिएको सहभागीतामुलक छलफल प्रष्ट पारेको छ। खोला, नाला, वनजंगलको छेउ-छाउ ढुंगाको छानो भएको सुन्दर थामी गाउँ आलम्पु गा.वि.स.को प्राकृतिक तथा सांस्कृतिक सम्पदा हुन्।

३८४ घरधुरी र १,७१७ जनसंख्या भएको आलम्पु गा.वि.स. मा अधिकांश थामी जातीको बसोबास रहेको पाइन्छ। उक्त गा.वि.स. मा ३८४ ढुंगे छाना भएको घर अध्ययन गर्ने क्रममा थाहा भयो। स्लेटको छाएको सुन्दर देखिने गाउँ-घर चर्‍याली र घट्टेखोलाको माझ हत्केला आकृति भएको आलम्पु गा.वि.स. नेपालकै उच्च गुणस्तरको स्लेट पाइने क्षेत्र मानिएको रहेछ। घर छाउनमा प्रयोग गरिने स्लेट ढुँगा परापुर्वकालदेखि खानीबाट झिक्ने गरेको आलम्पु निवासी उक्त दम्पती बताउनु हुन्छ। स्लेट खानी क्षेत्रमा प्रतिवर्ग फिटको रु. ५ पर्ने सिङगती, चरीकोट हुँदै भक्तपुर काठमाडौ, पोखरा आदि ठाउँमा पहिला देखि नै प्रख्यात भएको बताउनु हुन्छ निज दम्पति। यसरी परापुर्व कालदेखि प्राकृतिक स्रोतहरुसंग गहन सम्वन्ध रहेको थामी जातीको दिनचर्या भित्र पर्ने परम्परा रहेछ। थामी जातीहरु प्रकृतिलाई धर्मको रुपमा पुज्दा रहेछन् भन्ने जानकारी बौलाह पोखरी र थामी धर्म, संस्कृति र संरक्षण विषयको अध्ययनले देखाएको छ।

हरेक ऋषि तर्पणी पूर्णिमाको समयमा यस बौलाह पोखरीमा धार्मिक आस्था, आँटेको कार्य योजना, आफु र परिवारजनको सु-स्वास्थ्य, आयु-वरदान, धन-सम्पति माग्न जाने परम्परा छ। त्यसै गरी गाई, पशुपालन राम्रो होस् र खेतीपातीको लागि राम्रो मौसमको अपेक्षा गर्दै नयाँ उत्पदित अन्न, फलफूल, चढाउन लैजाने पुरानो थामी जातीहरुको धार्मिक तथा संस्कृति परम्परा रहेछ।

आ-आफ्नो घरको भाकल अनुसार धामी, झाक्री अथवा पुजारीलाई रक्सीको कोशेली राखी बौलाह पोखरी गई दिनुपर्ने अनुरोध गरिने सांस्कृतिक परम्परा रहेछ। ऋषि तर्पणी पूर्णिमाको ८-१० दिन अघि देखि नै सम्बन्धित घरमा आई उक्त धर्म गुरु (झाक्री, पुजारी, धामी) ले घरमुलीसंगै पित्री, घरमा देवताहरुलाई चुलामा बोलाई विहान साँझमा पुजा गर्नु पर्ने चलन रहेछ। खेतबारीमा उत्पादित नयाँ अन्न बाली फलफुलहरु, शिशिमा रक्सी, काँसको लोहटामा चोखो (मुखले) सफा धाराको पानी भरी अम्लिसोको मुना, काउलोको पात सजाएर चुलाको माथिल्लो भागमा राखी सम्बन्धित देवी, देवता, बक्साउनु पर्ने धार्मिक परम्परा रहेको कुरा थामी बृद्धहरुले छलफल गर्ने क्रममा बताउनु भयो। त्यसरी पुजा गर्ने क्रममा शुरुदेखि नै बौलाह पोखरीमा जानु पर्ने भाकल गरेको हुनाले हामी त्यस तर्फ जाने तयारी गर्दैछौ भन्दै पित्री, कुलदेवता, घरका देव-देवता, घर छेउमा रहेको देवी आदिको पहिला आफ्नो धामी, झाँक्री भाषामा सम्बोधन गर्नु पर्ने कुरा थामी पुजारीले भन्नुभयो। त्यसो त धामी, झाँक्री, पुजारी आफै पनि आफ्ना ढोलेहरु घरमा परिवार सदस्यहरुका साथमा वरदान माग्न अथवा समाजका सदस्यहरुलाई धामी, झाँक्री उतार्नु पर्ने छ भने बौलाह पोखरी जाने परम्परा रहेछ।

धार्मिक तथा सांस्कृतिक आस्थाको थलो वौलाह पोखरी रहनुको किंम्वदन्ती पनि थामी समाजमा रहेछ। ४० वर्षको गोगन थामी (पुजारी) उक्त किंम्बदन्ती यसरी सुनाउनुहुन्छ-



"आजभन्दा धेरै वर्ष अगाडि हाम्रा पुर्खाहरुको पालामा एक धामीले बौलाह पोखरीमा रहेको मणि निकाल्ने विचार गरेछन् रे । सदा झै घरका कुल देवताहरुलाई पुकार गरी यस्तै जनै–पूर्णिमाको समयमा साइत पारेर त्यस धामी आफ्नी श्रीमती र एक जोगी सहित जम्मा तीन जना बौलाह पोखरी गएछन रे । जाने क्रममा धामीले सबै देउता, खोला नाला ओडारसंग बल माग्दै बाँस बस्दै बौलाह पोखरी पुगेछन् रे । भव्य चिन्ता (धामी) बसेर एक अन्जुली अक्षता मन्तर गरेर आफ्नी धर्म पत्नीलाई दिएर यसो भनेछन् रे । मैले सबै देउ, देवता देवीसंग बल मागी सके । अब यस पोखरी भित्र गई मणी लिएर आउने छु । तिमीले यो मन्तरको अक्षता हातमा लिई राख्नु म मणि लिएर पोखरीमा उत्रना साथ यस अक्षताले मलाई लाग्ने गरी हान्नु । यसले लाग्यो भने म मणि लिएर आउने छु नत्र मलाई यस बौलाह पोखरीमा रहेको नागले मेरो चोला (ज्यान) उठाउने छ । त्यसै पछि, आफ्नो श्रीमती (धर्मपत्नी) र जोगीलाई पोखरी बाहिर छाडेर, धामी मणि लिन भनी पोखरीमा पसेछ । धामी पोखरी भित्र पसेको निक्कै समयपछि मात्र अजङ्को सर्प काधमा बोकेर पोखरीको विचमा धामी उत्रीएछ । त्यसै समयमा डर लाग्दो गर्जेको आवाज निस्केछ । अचम्मको आवाज र विशाल सर्पको डरले गर्दा आफ्नी श्रीमतीले अक्षता हान्नै बिर्सेछ । तुरुन्तै धामीलाई सर्पले बटारेर पोखरी भित्रै लगेछ । क्षणभरमा पोखरी भरी रगत भरिएको देखेपछि जोगी र श्रीमती त्यहाँबाट भागेछन् । गाउँ–घरमा आई उक्त घटनाको विवरण सुनाएपछि गाउँलेहरु त्यस ठाउँमा गएछन् । उनीहरुले धामीको मृत शरीर (लास) पोखरीको एउटा कुनामा तैरी रहेको देखेछन् । धामीको लासलाई निकाली पोखरीको निकास छेउमा गाडेर गाउँलेहरु फर्केछन् । उक्त धामीको चिहानघर आज भोली पनि देख्न सकिन्छ । उसै समयदेखि धामी, झाँक्रीहरु ऋषि तर्पणी जनै–पूर्णिमाको दिन बौलाह पोखरी पुग्नु पर्ने धार्मिक परम्परा पुर्खाकै पालादेखि रहेको भन्ने विश्वास गरिन्छ ।"

थामी झाँक्री अगाडी भन्नुहुन्छ-

"हाम्रो धामी, झाँक्री परम्परामा बौलाह पोखरीमा मरण भएका धामीको मृत आत्म आउने गर्दछ । उसलाई हामी मान, सम्मान गर्ने गर्दछौ । बौलाह पोखरीमा मर्ने उक्त धामी यसै आलम्पुका थामी भएको पर्ख्यौली भनाई छ । त्यसैले पुर्खा धामीको आत्मलाई भेटन र धार्मिक शक्ति सम्पन्न बौलाह पोखरीसंग धामी विद्याका लागि बल, वरदान माग्न जाने चलन छ ।"

आफ्नो अग्रजहरुले बसालेको रिती थिती यसै गरी हामी मान्दै छौ भन्नुहुन्छ निज थामी झाँक्री ।

झाँक्री गोगन थामी बौलाह पोखरी आफुले जानेदेखि त्यस्तै रहेको र शक्तिशाली भएको कुरा यसरी बताउनु हुन्छ-

"मैले पनि पुर्खा झाँक्रीहरुसंग सुनेको हुँ । आजको बौलाह पोखरीको सिधा तल अर्को ठूलो पोखरी थियो रे । त्यस पोखरीलाई बहिनी र अहिलेको बौलाह पोखरीलाई दिदी भनी धार्मिक रुपले मानसम्मान गर्ने परम्परा थियो रे । खोई के भनेर हो उनीहरु बीचमा झगडा भएछ । त्यसै क्रममा बौलाह पोखरी (दिदी) ले आफु भन्दा तलतिर रहेको पोखरी (बहिनी) लाई लात







हानेर भत्काई पठाएछ रे । उक्त पोखरी (बहिनी) भत्केर (भाग्दा) जाँदा एउटा ठूलो सर्प (नाग) निस्केर बौलाह पोखरीमा पसेको भनाई छ । उक्त सर्प (नाग) आज भोली पनि बौलाह पोखरीमा देख्न पाईन्छ । धर्म मनले चिताए उक्त सर्प (नाग) ले दर्शन बौलाह पोखरीमा दिने गर्दछ । भत्केर गएको पोखरी क्षेत्रमा आज भोली चौरी तथा भेडा पाल्नको लागि गोठ बनाएको र हामी बौलाह पोखरी गएको समयमा त्यही बस्ने गर्दछौ । पुजा गर्ने समुहमा कोही नराम्रो धारणा भएको व्यक्ति भए अथवा रजस्वला भएको महिला पुगेमा पोखरी बाक्लो बादल लाग्ने र उम्लेको जस्तै बादल आई राख्ने हुनाले "बौलाह पोखरी" भनिएको होला ।"

आलम्पु- ५ निवासी उहाँ झाँक्री गोगन थामी आफ्नो बाबु, बाजे र बराजे देखि नै धामी, झाँक्री प्रथा अपनाउदै आएको कुरा उहाँसंगको विशेष छलफल कार्यमा उहाँले बताउनु भयो । जट्टा परेको लामो टुप्पी पाल्नु भएका निज झाँक्री थामी समाजमा मुख्य पुजारीको रुपमा चिनीनु हुँदो रहेछ । पुर्खाहरुकै पालादेखि देउ, देवता, पित्रीको रुची अनुसार झाँक्री उत्री समाजको सेवा गर्नु पर्ने धार्मिक प्रचलन रहेको कुरा उहाँले बताउनुभयो । झाँक्री विद्यासंगै गोगन बहादुर थामी विभिन्न जडीबुटीको औषधी तयार गरी गाउँलेहरुको स्वास्थ्य उपचार पनि गर्नु हुंदोरहेछ । यसरी घरेलु औषधि बनाउनमा प्रयोग हुने वनस्पति जंगली जनावरहरुको हाड, छाला, रौ, वरिपरिको जंगल र अन्य क्षेत्रहरुबाट उपलब्ध हुने रहेछ । कस्तुरी मृगको छाला, रौ, हाड पनि औषधि तयार गर्दा चाहिने कुरा निज झाँक्रीले बताउनु भयो ।



पुर्ख्यौली झाँक्री विद्याको बिडो सम्हाल्नु भएका गोगन बहादुर थामी समाजका अगुवा हुनुहुंदो रहेछ । गाउँघरमा अन्य व्यक्तिहरु धामी उत्रने भए उहाँले धार्मिक अथवा आफ्नो झाँक्री विद्याले सहयोग गर्नु पनि हुंदो रहेछ । त्यस्तो व्यक्तिहरु उहाँ कहाँ गुरु थाप्न आउने चलन रहेछ । उक्त प्रथाले होला सबैले गुरु भनी सम्बोधन गर्ने







सामाजिक तथा व्यवहारिक चलन देखिन्छ। कुल बहादुर थामीको घरबाट यस सालको बौलाह पोखरीमा धार्मिक यात्रा लैजाने पक्का भएको रहेछ। करिब एक हप्ता अघिदेखि उनीहरु विहान-बेलुका उक्त घरमा भेला भई पुजा-आजा गर्दै हुनु हुँदो रहेछ। छिमेकीहरुले वियरको शिशिमा रक्सी भरी खोयाको विर्को लगाई कोसेलीको रुपमा उपरोक्त घरमा ल्याउने परम्परा रहेछ। त्यसरी ल्याएको सबै कोसेलीहरुलाई चुलाको माथिल्लो भागमा मिलाएर राख्ने रहेछ। गाउँ-घरका बुढा बुढी, केटा केटी भेला हुने रमाइलो र सामुहिकता परम्परा रहेको भान हुने रहेछ। बौलाह पोखरीमा जाने भाकल गरिए अनुसार राखिएको झाँक्री पुजा (चिन्ता बस्ने) गरिएको घरमा घरधनी कुल बहादुर थामी पनि धामी गर्नु हुँदो रहेछ। झाँक्री गोगन थामी र कुल बहादुर थामी दुबैले घरमा कुल देवता, अन्न बाली राख्ने भकारीसंग सम्वन्धित देवता, लगायत अन्य देव देवीहरुको सम्मान गर्दै, बौलाह पोखरी जाने सबैको नाम लिएर रक्षाको लागि उनीहरु (पितृ देव, देवता) संग बल माग्नु पर्ने समुहका एक बृद्धले बताए।

कतिजना भरिया कतिजना ढोले जाने भन्ने कुरा अगाडी नै व्यवस्था गरेको हुँदो रहेछ। बाटो विसाउने अथवा बास बस्ने ठाउँमा आवश्यक पर्ने राडी-पाखी, सातो-सामल, घरेलु पेय (रक्सी, जाडँ) पदार्थ, फलफूल आदि आफ्नै गाउँ-घरबाट लगि जानुपर्ने रहेछ। "हिमालयको यात्रा सजिलो छैन" आवश्यक पर्ने सबै कुरा लैजानु पर्छ भन्दै एक थामी बृद्धले भन्नुभयो। प्रस्थान गर्ने समयको साइत झाँक्रीले बताए पछि मुख्य बुढ्यौली (थामी भाषामा माईखावा भनिदो रहेछ।) सबैलाई तयार रहुन आज्ञा दिनुहुने रहेछ। उता झाँक्रीले कुलदेवता, पितृहरुलाई बोलाउदै-

**"फलानोको नाममा बौलाह पोखरी लैजाने भाकल थियो भन्ने रहेछ। अब हामी यति ढोले, भरिया र मुलघरका गरी यति जना जाने तयार भयौ। हामीलाई बाटोमा हिंड्दा वाण पर्ला, दुश्मन लाग्ला, विरामी पर्ने जस्ता समस्याबाट रक्षा गर्नुहोला। हामी नआइपुगुन्जेलसम्म यस घरको हेरचाह यो चुला, यस थानथपना (अगेनाको छेउमा राखिएको पुजाको सामान) को सुरक्षा पनि गर्नु होला।"**







यसरी झाँक्रीले फलाकेको बेला सबै ढोलेहरुले राम्रोसंग ढ्याङ्ग्रो गजाले बजाउदै सै बोम्वो सै सै भनी झाँक्रीको लागि बल माग्नु पर्ने रहेछ। फेरी झाँक्रीले आफ्नो बोलीद्वारा कन्या केटीलाई दियो कलश बोकाई बौलाह पोखरी जाने रहेछ। बौलाह पोखरी गएर आयु, वरदान, धन, सम्पति, पशु-पक्षी, सुख, शान्ति मागी ल्याउछौं रक्षा गर ! क्षमा गर ! भन्दै झाँक्री आफ्नो ढ्याङ्ग्रो बजाउदै लगाएको जामा फर-फर पार्दै पित्री, देव-देवतालाई बक्साउनु पर्ने धार्मिक संस्कार रहेछ। यसै समयदेखि महिला, केटा-केटी, बुढा-बुढी स्वर मिलाएर-

> "कन्या केटीलाई अगाडी लगाई, सुनाको पुम्पा हातमा लिई बौलाह पोखरी कुण्डली माई जादै छौं से-बोम्बो सै-सै।"

भनी गीत गाउँन चुलाबाटै शुरु गर्नु पर्ने रहेछ। काँसको लोहटामा अम्लिसोका मुना, काउलोको पात, फुल आदिले सिंगारेको कलाश (थामी भाषामा: पुम्पा भन्दो रहेछ) लाई कन्या केटीलाई बोकाई पितृ घरबाट निकाल्नु पर्ने चलन रहेछ। सबैजनाले स्लोक बद्ध तरिकाले-

> "बौलाह पोखरी कुन्डली माई कन्याकेटीलाई सुनाको पुम्पा, चाँदीको पुम्पा बोकाई आउँदै छौ, रक्षा गर ! क्षमा गर ! से-बोम्बो, सै-सै।"

गीत गाउँने परम्परा भएको पाइयो। कन्या केटीलाई अहिल्लो पंक्तिमा पारी सबै ढोलेहरु ढेङग्रो बजाउदै से-बोम्बो सै-सै... भन्दै गाउने त्यसैगरी धामी, झाँक्री, पितृ, देव देवताहरुको आज्ञा अनुसार नाच्दै फलाक्दै घरको आँगनमा आइपुग्नु पर्ने हुदोरहेछ। आँगनमा सुकुल, गुन्द्री राडी ओछ्याएर उनीहरुलाई सगुन राखि सम्मान गर्नु पर्ने रहेछ। आगनमा विछ्याएको गुन्द्री वा सुकुलमा आई कन्याकेटीले पितृ चुलाबाट बोकि ल्याएको कलाश (पुम्पा) लाई समाई राख्नु पर्ने र उसलाई केन्द्र मानी धामी, झाँक्री, ढोलेहरुले परिक्रमा गर्ने परम्परा रहेछ। धामी, झाँक्रीहरुले आफ्नो मुन्धुमद्वारा त्यहाँ आएर पनि कुल देवता, पितृहरुलाई बक्साउदै बाहिरीया देवता, देवीलाई सम्बोधन गर्नु पर्ने धार्मिक परम्परा रहेछ।









आँगनमा आई धार्मिक कार्य गर्ने क्रमसंगै बौलाह पोखरी जाने बेलाको सगुन राख्नु पर्ने चलन रहेछ। सगुन राखिदिए पछि धामी झाँक्रीले आफ्नो मुन्धुमद्वारा सबै देव देवतालाई बक्साई सकेपछि ढोलेहरुले सबैलाई प्रसादको रुपमा बाड्ने परम्परा रहेछ। झाँक्री पूर्ण बहादुर थामी भन्नुहुन्छ-

**"यसरी पितृ देवहरुलाई आफ्नो परम्पराले बोलाउदै खान दिएर सम्मान गरी हामीले आफ्नो आङ (कुम) बलियो संग बाध्नुपर्छ, त्यस पछि ढोलेहरुको रक्षा, उक्त समुहमा गएका सबैजनाको रक्षाको लागि बल मागी सकेपछि हामी कुलदेवतासंग विदा हुनुपर्छ । त्यसै गरी बाटोमा जाने समयमा वायु, खोला, हावा, धर्ती, देवी, जस्तो देव-देवता सम्पर्कमा आउछन् उनीहरु सबैलाई सम्हाल्दै साथ लगाउदै बल माग्दै जानुपर्ने हुन्छ । यसो नगरे उनीहरु हामी (धामी/झाँक्री) संग रिसाउन सक्छ, कुनै बेलामा त हामीलाई नै दुर्घटनामा पार्न पनि सक्छ झाँक्री पूर्ण बहादुर थामीले भन्नुभयो । ४५ जनाको लावा-लस्करको समुहमा मुख्य घरबाट ढेङग्रो बजाउदै, धामी-झाँक्री नाँच्दै मुन्धुम गाउदै, सानो नानी भएका आमाहरु आफ्नो नानीलाई काँधेमा बोक्दै पानीबाट आफु र नानीलाई ओताउनु (भिज्नबाट जोगाउनु) लाई घुम आदि बोक्दै जानुपर्ने रहेछ । भरियाहरु डोकामा बाटोमा आवश्यक पर्ने सामनहरु बोकेर लैजानु पर्ने । उपरोक्त बौलाह पोखरी धर्म तथा सांस्कृतिक पदयात्रामा गएका सबै समुह सदस्यहरुलाई जाँदा र आउँदा आवश्यउक पर्ने सातो सामल लैजानु पर्ने रहेछ ।**

**बाटोमा पर्ने आफन्तहरुले आँगनमा सगुन राखी धामी, झाँक्री सबैलाई सम्मान गर्ने थामी समाजका परम्परा रहेछ । सगुन राखी स्वागत गर्ने घर आँगनमा कन्या केटीले बोकेको कलास**









(पुम्पा) राखी देव-देवताहरुलाई भाकी, घरपरिवारलाई आशिष दिनुपर्ने रहेछ । सगुनलाई बुढ्यौली (माइखावा) ले झाँक्री धामीलाई पहिला दिई अरु ढोलेहरुलाई बाड्ने चलन रहेछ । बुढ्यौली (माइखावा) कैले थामी भन्नुहुन्छ यसरी थामी, झाँक्रीलाई लिएर हिड्नु कठीन हुन्छ भन्दै यसो भन्नुहुन्छ "माइखावाले धामी, झाँक्रीहरुलाई कुन ठाउँमा सगुन राखिदिनु, कुन कुराको अपुग, ज्यादा भएको छ भन्ने कुराको ज्ञान राख्नु पर्ने हुन्छ । धामी, झाँक्री बस्दा (पुजा गर्दा) कहि कतैबाट बाण आउछ भन्ने कुराको हेक्का राख्नु पर्ने हुन्छ । धामी, झाँक्रीहरुलाई पुजा गर्दै गरेको ठाउँ सहयोग गर्नु, शुद्ध खानेकुरा, पिउने कुरामा ध्यान दिने काम माइखावाले गर्नु पर्ने हुन्छ ।"

उहाँ भन्नुहुन्छ ।

बौलाह पोखरी कुण्डली माई ! सत्यको देव हो दुदु ! कन्या केटीलाई अगाडी लगाई ‼ सुनको पुम्प हातमा बोकाई ! धामी, झाँक्री लिएर आउदैछौं । रक्षा गर ! क्षमा गर ! बौलाह पोखरी कुण्डली माई से-बोम्बो सै-सै..... । अन्नको सह माग्न आउदैछौं ! सम्पति माग्न आउदैछौं ! छोरा र छोरी माग्न आउदैछौं ! आयु माग्न वरदान माग्न आउदैछौं । सातो माग्न आउदैछौं । पुर्ख्यौली देउतालाई भेट्न आउदैछौं । बौलाह पोखरी कुण्डली माइ ! रक्षा गर ! क्षेमा गर ! भन्दै भावपूर्ण लयात्मक स्वरले गीत गाउदै छिमेकीहरुले राखिदिएको सगुन (रक्सी) लिदै दोवाटो, ठुलो ढुंगा भएको ठाउँमा सगुन राखी पाखा, पखेरामा रहेको भुत, प्रेत, देव-देवतालाई सम्बोधन गर्नु पर्ने चलन रहेछ ।







स्वर मिलाई गाउँदै, नाच्दै हिड्ने क्रममा अन्नबाली लगाएको डिल (क्षेत्र) मा राडीपाखी बिछ्याएर पुम्पालाई कन्या केटीको साथमा राखी धामी, झाँक्री बसाई पुजा आजा गर्नुपर्ने र उनीहरुलाई सगुनको व्यवस्था माइखाबाले गर्नुपर्ने रहेछ। अन्न वाली राम्रो होस् भन्ने आशिष दिँदै राखिएको सगुन त्यस वरिपरि भएको सबै देव-देवता, देवी, भुत-प्रेत, मृतात्म आदिलाई चढाउँदै झाँक्री, धामीलाई खुवाएर अगाडी बढ्न माइखावाले झाँक्री, धामीसंग सल्ला लिने चलन रहेछ।

पाखा-पखेरा, खेतबारी, खोला-खोल्सा पार गरी आउने क्रममा देव-देवउताहरुसंग बल माग्नु पर्छ भनी माइखावा (बुढ्यौली) कैले थामी भन्नुहुन्छ। धार्मिक र सांस्कृतिक महत्वको बौलाह पोखरीबाट उत्पति भएर बगेर आएको चन्थाली खोला निर्मल पानी सललल.... बगेको खोलाको डिलमा राडी विछ्याएर सुनको पुम्पा कन्याकेटीको साथमा राखी गाइएको बौलाह पोखरी लक्षित सांस्कृतिक तथा धार्मिक गीत उनीहरुले व्यक्त गरेको भावनात्मक व्यवहारको अध्ययन गर्दा प्राकृतिक संरक्षणमा अति गहिरो सम्बन्ध देखिन्छ। छलफल गर्ने क्रममा एक पदयात्राकै बृद्ध सहभागीले भने-

**“हिमालय क्षेत्र हुँदै बौलाह पोखरीबाट उत्पन्न भई आएको यो खोला हाम्रो थामी समाजको निमित्त धार्मिक महत्वको छ। हामी यस खोलामा आई पुजा आज गर्ने गर्दछौ। यसका विभिन्न खोल्साहरुसंग भेट हुँदै भोटेकोशीमा पुगेर मिसीदै सप्तकोशी पुग्दछ।”**



छङछङ बगेको खोला देखाउदै यहाँ त मिठो माछा पाउन सकिन्छ भनी उहाँले भन्नुभयो । हामी कहिले-काँही पुजा आजा गर्दा माछा पक्रन यस खोलामा पनि आउने गर्दछौ । खोलालाई पुजा गरेर मात्र माछा पक्रने गर्नुपर्छ नत्र विरामी हुने विश्वास हाम्रो गाउँ-घरमा छ । खोलाको छेउमा राखिएको सगुन सकेपछि बौलाह पोखरी कुण्डली माई कन्याकेटीलाई अगाडी लगाई सुनको पुम्पा लिएर आउँदै छौ रक्षा गर ! क्षमा गर ! गाउँदै उक्त यात्रा अगाडी बढ्ने रहेछ ।



धेरै बेरको उकालो हिडाई पछि एउटासम्म परेको खेती योग्य क्षेत्रमा राडी विछ्याई धामी, झाँक्रीलाई माइखावाले सगुन (रक्सी) राखिदिनुभयो । त्यसै ठाउँमा अर्को धामी, झाँक्री टोली आईपुगेमा एक अर्कामा सम्मान गर्नु पर्ने परम्परा रहेछ । कलश (पुम्पा) बोकेकी कन्या केटी आई बसेको उक्त सगुनलाई केन्द्र विन्दु मानी ढेग्रो बजाउदै धामी, झाँक्री सबैले परिक्रमा गरेर सगुन दिने रहेछ । भरीया, ढोले लगायत सबैजनालाई खाजा खुवाउने कार्यक्रम पनि त्यसै ठाउँमा गरियो ।



वरिपरि घना वन-जंगल, रमणीय देखिने उक्त क्षेत्र, उनीहरुको वर्षेनी विसाउने ठाउँ हुन सक्छ, धेरै वेरको थकाई मेटाईसके पछि झाँक्रीले फलाक्ने काम शुरु भयो । समुहमा बसेर अन्य यात्रुहरु पनि स्वर मिलाई बौलाह पोखरीको गीत गाउँदै हुनु हुन्थ्यो । त्यतिकैमा ५० जनाको समुहमा एक हुल धामी, झाँक्री पहाडै थर्कने गरी ढ्याङग्रो बजाउदै मुन्धुम फलाक्दै आइपुगे । त्यही आईपुगेपछि सर्वप्रथम पहिला आई बसेका झाँक्रीलाई ढ्याङग्रो बजाउदै सेवा ढोक गर्नुपर्ने परम्परा रहेछ । एक-आपसमा कुराकानी गर्दै थिए । पछि आईपुग्नेले पहिला आएको धामी, झाँक्रीलाई बस्ने ठाउँको लागि अनुरोध गर्नु पर्ने रहेछ । नयाँ आगन्तुक धामी झाँक्रीलाई सगुन पहिलो समुहका माइखाबाले राखी दिनुभयो । पछिल्ला समुहले पनि सगुन राखी ढ्याङग्रो





बजाउदै झाँक्री बस्न थाले । दुबै पक्षले सगुन लिएर त्यहाँबाट विदा भई जाने क्रममा त्यहाँ भएका भुमे देवता, सिमे देव, देवतालाई सम्झाउनु पर्ने, ढ्याङग्रो बजाएर बक्साउनु पर्ने धार्मिक परम्परा रहेछ । छर्के पानीको पर्वाह नगरी दुवै पक्षको भरिया, महिला बुढा-बुढी, नानीको आमाहरु आफ्नो नानीहरुलाई कोक्रोमा बोकी घुम, प्लास्टीक ओडाउदै हिंडे । ढोलेहरु ढ्याङग्रो बजाउदै, झाँक्रीहरु फलाक्दै जंगलै-जंगलको बाटो हुँदै उकालो जानु पर्ने रहेछ । सबैजना बौलाह पोखरी कुण्डली माई रक्षा गर ! क्षमा गर ! सुनको पुम्पा, चाँदीको पुम्पा बोकाई कन्य केटीलाई अगाडी हिंडाई आउदै छौं । से बोम्बो से-से भन्ने गीत गाउँदै हिड्नु पर्ने चलन रहेछ । जानुभन्दा अगाडी हाम्रो तर्फबाट केहि गल्ती भएमा क्षमा दिनु भनी स्थानीय देव-देवताहरुलाई बक्साउनु पर्ने चलन रहेछ ।

धेरै समयको उकालो जंगलको बाटो हिडे पछि एउटा स्लेटले छाएको घर आइपुग्यो । त्यो अन्तिम घर रहेछ । त्यस दिन त्यहि घरमा बास बस्नु पर्ने रहेछ । दुवै समुहको गरी जम्मा १३५ जना जति संख्यामा गइएको पदयात्रुहरु कोच लिएर बसीयो । झिमझिम पानी परिरहेको लेकाली जंगलको बाटो पार गर्दै आउँदा रुखका पत्ताबाट खस्ने जुका र भुइबाट खुट्टामा लाग्ने जुकाको वास्ता नगरी धुँवाको गुर्माइलो भान्सा कोठामा धामी, झाँक्रीका देवता थान लगायत ढोले, दर्शनार्थीहरु सँगै बसियो । धामी, झाँक्रीहरु आ-आफ्नो देवता थानमा बत्ती बाली ढेङग्रो बजाउदै पुजा-आजा गर्न थाले । उनीहरुले आफ्नो पितृ देव-देवताहरुलाई त्यहाँ आइपुगेको कुरा सुनाउनु पर्ने रहेछ । त्यसैगरी त्यहाँ वरिपरि रहेका जंगली देवता, भुत प्रेतलाई बक्साउनु पर्ने र बौलाह पोखरीलाई त्यस ठाउँमा आइपुगेको विन्ती गर्नु पर्ने हुन्छ भनी एक थामी (थाङमी) बृद्धले बताउनु भयो । धेरै समय पुजा गरेपछि दियोमा तेल थप्दै आफ्नो देव-देवतासंग विदा लिएर धामी झाँक्रीहरु देवता राखिएको छेउमा पल्टनु भयो । अधिकांश जाग्रम बसे । त्यसो त प्रायजसोले भेडाको ऊनबाट आफ्नै गाउँ-घरमा बुनेको पाखी (थामी भाषामा लुकुनी) कोट जस्तै लगाएर बौलाह पोखरी जाने परम्परा रहेछ । उक्त पाखीले उनीहरुलाई न्यानो हुने र पानीबाट पनि सुरक्षा रहन सक्ने रहेछ । गाउँघरको कला, मौसम अनुसारको व्यवहार, ज्ञान, सिप, धर्म, संस्कार पुस्तौं-पुस्तादेखि चली आएको चलन प्राकृति संरक्षण र दिगो सरल जीवन शैली पाइने रहेछ ।

विहान सबेरै उठेर मुख धुएर माइखावाले दियोमा तेल थपी दिँदै धामी झाँक्रीलाई विहानीको पुजा शुरु गर्न अनुरोध गर्नुहुंदो रहेछ । धामी, झाँक्रीले आफ्नो मुख धुएर देवताथानमा आइ ढोलेहरुसंग पुजा-आजा गर्दै आ-आफ्नो विद्याले गर्नु पर्ने सम्झाउनु, बक्साउनु पर्ने सम्पूर्ण कार्य सकेपछि अन्य बल-वरदान माग्ने समुहले त्यसै गरी लय मिलाएर गीत गाउँने चलन रहेछ ।

बौलाह पोखरी कुण्डली माई भन्दै लयात्मक धार्मिक भावपुर्ण गीत साथ-साथै कन्या केटीलाई कलश बोकाई धामी, झाँक्री आफुले लगाएको जामा फरफर पार्दै नाच्नु पर्ने धार्मिक परम्परा रहेछ । धामी, झाँक्री नाच्दै आ-आफ्नो पितृ देव-देवतालाई अब जाने बेला भयो भन्दै राखिएको देवता थानबाट जाने मूल ढोका तर्फ घुम्दै ढेङग्रो बजाउदै देव-देवतालाई सेवा ढोक गर्दै अगाडि बढ्नु पर्ने चलन रहेछ । अब जाउँ भन्ने झाँक्रीको संकेत पाए पछि ढोलेले राखिएको देवस्थान उठाउने र कन्या केटी कलश (पुम्पा) बोकी विस्तारै अघि बढ्नु पर्ने रहेछ ।







धामी झाँक्री आ-आफ्नो देवता फलाक्दै ढयाङग्रो बजाउदै पछि-पछि निस्कने रहेछ। त्यसको पछि अन्य लयात्मक बौलाह पोखरी कुण्डली माइको गीत गाउँदै निस्कनु पर्ने धार्मिक मान्यता रहेछ। बास बसेको ठाउँबाट निकाली ल्याइएको कलश उक्त घरको आँगनमा घर धनीले राखि दिएको सगुनमा आई राखिने परम्परा हुँदो रहेछ। धामी झाँक्री ढयाङग्रो बजाउदै देव-देवता फलाक्दै पुजा गर्नु पर्ने रहेछ। वास र सगुनको लागि खुशियालीका साथ सबैजनाले गीत गाएर र नाचेर धन्यवाद दिने चलन देखियो। धामी, झाँक्रीले आफ्नो मुन्धुम अथवा झाँक्री परम्परा अनुसार उक्त घर परिवारजनको सुख शान्तिको कामना गरिदिने। वरिपरीको सिमे, भूमे देव-देवतालाई बोलाइ सम्बोधन गर्दै ढयाङग्रो बजाएर विदा हुने परम्पराले साच्चै रोचक तथा प्रकृतिसंग गहिरो सम्बन्ध रहेको देखाउँछ।

त्यहाँबाट विदा भएर केहि समय उकालो हिंडे पछि एउटा ठूलो रुख आइपुग्यो र तिर्थालुहरु उक्त रुख तर्फ लाग्नु भयो। त्रिशुल चढाउने, फलफूल, अक्षता, भेटी चढाउने, बत्ति बाल्ने र ढोग गर्दै परिक्रमा गर्ने धार्मिक तथा सांस्कृतिक मान्यता रहेछ। त्यसरी रुखको पुजा गर्ने उसको आयु लामो होस् भन्दै आफ्नो आयुको मनोकांक्षा राख्दै अगाडि बढ्नु पर्ने उनीहरुको धार्मिक प्रथा रहेछ। माईखावा कैले थामीले रुखतर्फ फर्केर भन्नु भयो-







**"यो रुख हामी सानै छँदा देखि देखेको यस्तै थियो । म आफु बुढो भइसके तर यो रुख यस्तै देख्छु । अझसम्म यसको उमेर कसैले पनि बताउन सकेको छैन् । हाम्रो पुर्खाकै पालादेखि बौलाह पोखरी जाने सबैले यसैगरी यस रुखको पुजा गर्ने र आयु वरदान माग्ने धार्मिक परम्परा रहेको छ भनी बताउनु भयो ।"**

रुखसंग गरिएको उनीहरुको धार्मिक तथा सांस्कृतिक व्यवहार, नैतिक मान्यता र भावनात्मक सम्बन्धको गहिरो अध्ययन अनुसन्धान भई संरक्षण शिक्षामा समावेश गर्नुपर्ने आजको आवश्यकता देखिन्छ ।

हिमाली जंगलको बाटो हुँदै पाखा पखेरा पार गर्दै जाने क्रममा भेट्टाइएको चौतारी जस्ता विसाउने ठाउँहरु पनि पाइने रहेछ। त्यस्तो ठाउँमा राडी विछ्याएर कन्या केटीलाई कलश राखी धामी झाँक्रीलाई सगुन राखिदिनुपर्ने र धामी झाँक्रीले पनि वरिपरि रहेको भुत, प्रेत, देवताहरुलाई अन्साई-पन्साई गर्नुपर्ने परम्परा रहेछ ।
माइखावाले सगुनको रुपमा राखिएको रक्सीको शिशिबाट खोयाको विर्को खोली सर्वप्रथम रुखको पातले सबै देव-देवतालाई भन्दै पन्साउनु पर्ने चलन रहेछ। त्यसपछि उक्त सगुन (रक्सी) झाँक्रीलाई पहिला खान (पिउन) दिएर बाँकी अन्य ढोलेहरुलाई बाड्ने सामाजिक परम्परा रहेको पाइयो। खाजाको अन्य खानेकुराहरु पनि बाँडीचुडी खाने चलन रहेछ। थकाइ मेटाउदै एक-आपसमा कुराकानी गर्दै खाएको दृश्यले धार्मिक वनभोजको भान हुन्थ्यो। त्यसै ठाउँमा आइपुग्नु भएका चिलङखा-६ निवासी ६२ वर्षका एक दलित धनबहादुर नेपालीसंग कुराकानीकै क्रममा उहाँले बौलाह पोखरी र आफ्नो जीवनमा पाएको सफलता बारे काव्रा टोक्दै यसो भन्नुभयो-











"म गाउँघरमा नै बाबु बाजेकै पालादेखि लुगा सिउने, सनाइ बजाउने दलित हुँ । पहिला मलाई साह्रै दु:ख थियो । विहे गरेको धेरै वर्ष सम्म पनि मेरो श्रीमतीको कोखबाट सन्तान भएन् । गाउँलेहरुले बौलाह पोखरी गएर सन्तान माग्न जाऔं भने । होला त नि भन्ने विश्वास लिएर बौलाह पोखरी जाने चाजो-पाजो मिलाए । यस्तै जनै-पूर्णिमाको समयमा म र मेरी श्रीमती भएर बौलाह पोखरी आयौं । बौलाह पोखरी पुगेर धूप बत्ति बाली साँचो सत्य मनले सनाइ (बाजा) बजाएर मेरो चिताएको कुरा पुरा भएमा तपाईलाई देखाउन लिएर आउने छु भन्दै ध्यान गरे । मन-मनै भगवानको ध्यान गर्दै बौलाह पोखरीलाई घुम्दै फन्को मारे पछि घर पुगे पनि धुप बत्ती बालि राखें । एक बर्ष पछि त गर्भ रह्यो र छोरा भयो । अर्को वर्ष तामाङ्ग झाँक्रीलाई गैदिन भने र बौलाह पोखरी देखाउन ल्याउछु भन्ने भाकल थियो र लिएर आए । त्यसपछि अहिलेसम्म एक मानो खान र एक सरो लगाउन पुगेकै छ । त्यस पछि ३ वर्षको फरक पारी बौलाह पोखरी जाने गर्दछु । यस पल्ट भने हाम्रै गाउँको एक जना धामी गुफा बस्न आएको छ र उसलाई गुफाबाट निस्कदा सनाइ बजाई दिनु पर्ने भएकोले म आएको हुँ । त्यस कार्यको लागि तामाङ्ग झाँक्रीहरु पल्लोबाटो भएर आउँदै छ भन्दै निज दलित बृद्धले बताए । बौलाह पोखरीमा पुगेर कसरी सनाई वजाएर सन्तान मागेको थिए र सत्य भयो त्यसको अभिनय बौलाह पोखरी पुगेर गर्ने छु फोटो खिचिदिनु होला भन्नुभयो र अघि हिड्नु भयो ।"



समयको ख्याल राख्दै माइखावाले यात्रा जारी राख्ने संकेत गर्नु भए पछि सबै जना गाउँदै ढ्याङग्रो बजाउदै बौलाह पोखरी कुण्डली माई रक्षा गर ! क्षमा गर ! भन्दै हिमाली जंगल निगालो घारी छिचोल्दै सल्लाघारी आइपुग्यो । बीच-बीचमा थकाई मार्दै उकालो हिंडे पछि बाटोमा सोभ्रो अग्लो खम्बे ढुंगो भेट्टाइयो । धामी भ्राँक्रीहरु त्यहाँ आएर उक्त ढुंगाको फेदमा फूल पानी धुपी सल्लाको हाँगा राखेर ढ्याङग्रो बजाएर पुजा गर्न शुरु भयो । त्यहाँबाट हिंडेपछि पहिलो पोखरी आइपुग्यो । त्यहाँ आइपुगे पछि धामी भ्राँक्री ढ्याङग्रो बजाएर उक्त पोखरीको नाम लिएर सम्बोधन गर्न थाल्नुभयो । त्यसो गरी पुजा (धामी, भ्राँक्री बसेको) गरेको समयमा जो कोहि पनि अगाडी बस्नु हिड्नु नहुने धार्मिक नियम रहेछ । ढोलेहरु आफ्नो ढ्याङग्रो बजाउनमा तल्लिन थिए भने अन्य सहभागीहरु बौलाह पोखरी कुण्डली माई रक्षा गर ! क्षमा गर ! ३-पोखरीको हामी तिम्रो शरणमा छौ, से बोम्बो सै सै सै भन्दै स्लोक पूर्ण तरिकाले गीत गाउँदै थिए । माइखावाले विछ्याएको राडीमा बस्ने अनुरोध गरेपछि धामी, भ्राँक्री र कलश बोकेका कन्या केटी बसे । पानी परिरहेको हुनाले छाता, प्लास्टीक घुम ओढ्दै सगुन खाएर सिध्याए पछि अर्को पोखरी तर्फ लागियो । १५-२० मिनेटको फरकमा पर्ने ३-पोखरीको दोस्रो पोखरी



आइपुग्यो र त्यसै गरी उक्त पोखरीको पनि पुजा गर्दै वरिपरी रहेको देव-देवताहरुलाई सम्झाउँदै, फलाक्दै तेस्रो पोखरी तर्फ यात्रा बढ्यो । ३-पोखरीको पहिलाको पोखरी अथवा माथिल्लो क्षेत्रमा रहेको पोखरीमा पुगेपछि सबै धामी झाँक्रीले पोखरीको एक छेउमा भएको पुजा गर्ने ठाउँमा गई ढ्याङग्रो बजाउदै पोखरीलाई आफ्नो धामी, झाँक्री परम्पराबाट बोलाउदै पुजा आजा गर्नु पर्ने चलन रहेछ ।



ढोलेहरुको साथमा धामी, झाँक्रीहरुले उक्त पोखरीको परिक्रमा गर्दै त्यस ठाउँमा भएको मृतात्माहरु, भुत, प्रेत, वन देउता आदिको पुकार गर्नु पर्ने कुरा माइखावाले बताउनु भयो । धुपी, सल्लाघारी भएको पहाडले छेकेको ३-पोखरी मध्येको सबैभन्दा माथिल्लो पोखरी गहिरो र भौगोलिक सुन्दरताले पूर्ण भएको देखिन्छ । दोस्रो पोखरी पनि गहिरो र वरिपरि प्राकृतिक रुपमा उठेको डील (थुम्का) ले घेरिएको भौगोलिक अवस्थामा देखिन्छ । चिमल, लाली गुराँस, चाँप, सल्ला, धुपी जस्ता वृक्ष प्राकृतिक रुपमा लह-लहएका भौगोलिक सुन्दर क्षेत्र संरक्षण र प्राकृतिक सुन्दरताको प्रवर्धन गर्नु पर्ने आवश्यकता देखिन्छ । त्यो क्षेत्र वनस्पति तथा वन्यजन्तु विविधता पनि धेरै धनी र महत्वपूर्ण रहेको कुरा एक सहभागीले बताउनु भयो ।





उक्त ३-पोखरी धार्मिक तथा सांस्कृतिक सम्मान सकेर धामी, झाँक्रीहरुलाई खुवाएर अगाडी हिड्ने काम लगातार भयो । उकालो ओरालो भन्ज्याङ हुँदै सल्लाको घारीलाई त्यागी नाङ्गो चट्टाने पहाडको भेदमा रातको बास बस्न गइयो । जम्मा एउटा गोठ प्लास्टीकले छाएको रहेछ । पानी परेको हुनाले बस्न नहुने हिलो र चिसो गोठमा कोचल मचल गरी बस्ने काम भयो । चिसो ठाउँको पिरो धुवा, बौलाह पोखरी रक्षा गर, भुल भए, गल्ती भए, क्षमा गर भन्ने भावना मनमा राखी रात कटाउने काम भयो । एउटा कुनामा धामी, झाँक्री, कन्या केटी, देवताथान, दियो, कलश राख्ने काम भयो । त्यहि छेउमा बसी धामी झाँक्रीले देवताहरुलाई बोलाउने, सम्झाउने काम भयो । रातभर जाग्रम बसेर मिरमिरे विहान उठेर सधैं झैं चिसो पानीमा मुख सफा गरेर धामी, झाँक्रीहरुले ढ्याङ्ग्रो बजाउदै दियोमा तेल थपी पितृ देव-देवता, त्यस पहाड वरिपरी भएको देव-देवी, भूत प्रेत, जल देउ (सिमे) सम्पर्कमा आउने जति सबैलाई बोलाएर सम्मान गर्ने बल माग्ने कार्य गर्नु पर्ने रहेछ । त्यसै गरी अन्य सहभागीहरु भेला भई बौलाह पोखरी कुण्डली माइ, सुनको पुम्पा चाँदीको पुम्पा लिएर आयौं ! कन्या केटीलाई अगाडी लगाई आयु माग्न, वर माग्न हामी आयौं ! नयाँ अन्न, फल लिएर पुर्खाको हंस भेट्न आयौं ! बौलाह पोखरी कुण्डली माई रक्षा गर ! क्षमा गर ! से बोम्बो सै सै सै ।



पानीले रुझ्दै साना नानीहरु लिएर आयौ बौलाह पोखरी कुण्डली माई रक्षा गर ! क्षमा गर ! दुःख बिसाउन आयौ ! शान्ति माग्न आयौ ! छोरा छैन, छोरी छैन छोरा माग्न आयौ ! सन्तान माग्न आयौ ! बौलाह पोखरी कुण्डली माई रक्षा गर ! क्षमा गर ! से बोम्बो सै सै सै ! सुनको पुम्पा, चाँदीको पुम्पा लिएर आयौ, कन्या केटीलाई अगाडी लगाई हामी आयौ, लयात्मक र भावनात्मक रुपमा व्यक्त गरिएको सांस्कृतिक गीत संगै झाँक्रीहरुले ढ्याङ्ग्रो बजाउदै फन्को मार्दै देव-देवताहरुलाई फलाक्दै बाटो लाग्ने संकेत गर्नु हुने रहेछ । सेता जामा, सेतै फेटा, कुम र कम्मरमा लगाईएको रुद्राक्षको माला, घन्टी, झ्याकी (सानो घण्टी) धार्मिक महत्व भएको चराहरुको सर्वाङ्ग (टाउको वा पुरा शरीर) ले सिंगारीएको धामी, झाँक्री (बोम्बो) एक हातमा ढ्याङ्ग्रो र अर्को हातमा गजा लिएर बजाउँदै देव-देवतासंग कुरा गर्नु पर्ने रहेछ । धार्मिक यात्रामा हिडेको यात्रुहरुको आयु, सातो हेर्नु पर्ने, बौलाह पोखरीसंग सम्पर्क गर्नु पर्ने रहेछ । अन्य धामी, झाँक्रीले वा कुनै जनवारले (अन्य धामी, झाँक्री) नराम्रो विचार गरी वाण पठाउने हुँदा यी सबैको ख्याल राख्नु पर्ने हुन्छ भन्नु हुन्छ कि उनीहरुकै अनुमतिबाट सन्तुष्ट हुनु पर्ने हुन्छ-

**"हामी हिड्नु भन्दा अगाडी हाम्रो एरिया बाध्नु पर्ने हुन्छ । त्यसो गर्नु पर्दा हामी सबै देव-देवता, देवी, सिमे, भुमे, पितात्मा र बौलाह पोखरीलाई सहयोग माग्ने धार्मिक परम्परा छ । त्यसरी सबै देव-देवता हाम्रो चारैतिर (वरिपरि) रहेको हुँदा कसैले नराम्रो विचारले वाण पठाए पनि खवर दिने हुन्छन् । हामी धामी, झाँक्रीले सबै देव-देवताहरुकै आज्ञा अनुसार हिड्नु पर्दछ ।"**

माइखाबाको सल्लाह अनुसार सबैजना हिड्ने तयार भइसकेको अवस्था थियो, झाँक्रीले सबैलाई सम्झाउदै भन्नुभयो-

**"देउ थान भन्दा अगाडी कोही पनि नगई दिनु होला । वाण लाग्न सक्छ । आफैले विचार पुऱ्याउनु होला ।"**

त्यसपछि पङती-पङती भई गीत गाउँदै ढेङग्रो बजाउदै बौलाह पोखरी जाने क्रम अघि बढ्यो ।



लगभग दुई घण्टा जति उकालो हिँडे पछि भौगोलिक, प्राकृतिक सुन्दर, धार्मिक तथा सांस्कृतिक महत्वको बौलाह पोखरी उच्च हिमाली क्षेत्र पर्वतको थोरै तल वरिपरि कडा चट्टानको आडमा लमतन्न सुतिरहेको अवस्थामा झलक्क देखियो । नाङगो पर्वतको काखमा रहेको बौलाह पोखरी प्रायः जसो बाक्लो बादलले छोपीरहने हुँदो रहेछ । समुद्र सतह देखि यो पोखरी ४,४०० मीटर उचाईको हाराहारीमा पर्दछ । ३०० मीटर लम्बाई र २०० मीटर चौडाई भएको बौलाह पोखरी निक्कै गहिरो भएको अनुमान रहेको पाइन्छ । मनकामना माईले इच्छाएको कुरा पुरा हुने किंम्बदन्ती झै बौलाह पोखरीले चिताएको मनोकांक्षा पुरा गरिदिने विश्वास रहेछ । समाजमा परापूर्व कालदेखि चलि आएको चलन मानी ल्याएको परम्पराले गर्दा पनि होला परैबाट हर्षले विवोध हुँदै गाइएको लयात्मक गीत, ताल मिलाई बजाइएका ढ्याङग्रो, जामाको फेरो घुमाउदै धामी झाँक्री नाचेको दृश्य बयान गर्न नै गाह्रो छ ।

बौलाह पोखरी कुण्डली माई सुनको पुम्पा लिई आइपुग्यौ ! चाँदीको पुम्पा लिएर आयौ ! कन्या केटी लिएर आयौ ! रक्षा गर ! क्षमा गर ! बौलाह पोखरी कुण्डली माई नानी लिएर आईपुग्यौं, से बोम्बो सै सै सै बौलाह पोखरी कुण्डली माई रक्षा गर ! क्षमा गर ! भन्दै पोखरी तर्फ फर्केर भावपूर्ण स्वरमा गाइएको गीतले मनको भित्री भागमा छुने रहेछ । उक्त दृश्यले साँच्चै समुदायहरुसंग त्यस क्षेत्र छुट्टाउन नै नसकिने सम्बन्ध देखाउँछ ।








अन्य क्षेत्रबाट आइपुगेका धामी, झाँक्रीहरुसंग भेट हुँदा एक आपसमा चिनाजानी गर्ने परम्परा रहेछ। बौलाह पोखरीकै डिलमा जम्का भेट भएका तामाङ धामी, झाँक्रीसंग ढ्याङग्रो बजाएदै आ-आफ्नो धामी, झाँक्री बोलीले कुराकानी गर्दै हुनुहुन्छ, थामी धामी, झाँक्रीहरु। चिनाजानी कै क्रममा सगुन राखी दुबै तर्फको देव-देवता बोलाउने प्रचलन रहेछ। राम्ररी जान्नेको तर्फबाट आशिष लिने र सेवा ढोक गर्नु पर्ने धार्मिक मान्यता रहेछ। तामाङ्ग धामीले विभिन्न रङगी विरङगी चराको प्वाँखले सजाएको फेटा ओड्नु भएको थामी धामी झाँक्रीबाट उहाँको समुहले आशिष लिइ राख्नु भएको छ। उता थामी धामी, झाँक्रीले ढ्याङग्रो बजाई आशिष दिँदै हुनुहुन्छ। उपरोक्त संस्कारले धामी, झाँक्री मित्रताको परम्परा पनि बौलाह पोखरी सिमसार क्षेत्रसंग गहिरो सम्बन्ध भएको तथ्य बोध गराउछ।

एक आपसमा भएको मित्रवत व्यवहार पछि थामी धामी, झाँक्री एकै साथ पोखरीको निकास तर्फ अगाडी बढ्यो। घरबाट नयाँ अन्नको रुपमा ल्याएको मकैको जुत्तो फलफूल जस्तैः- काँक्रो, नासपति लगायतका अन्नपात, बौलाह पोखरीको बीचमा पर्ने गरी फ्याक्ने धार्मिक परम्परा रहेछ।

बौलाह पोखरी कुण्डली माई सुनको पुम्पा लिएर आयौं। चाँदीको पुम्पा लिएर आयौ भन्दै सामुहिक गीत गाउँदै धामी झाँक्री ढ्याङग्रो बजाउदै देव-देवताहरुलाई बोलाउदै बौलाह पोखरीको निकास भित्र पस्ने धार्मिक परम्परा रहेछ। पानीमा डुबेर धेरै समयसम्म बल माग्ने वरदान माग्ने, विरामीहरुको आयु, सातो मागिदिने, धन माग्ने, सम्पति माग्ने, सन्तान माग्ने चलन रहेछ। दुःख कष्ट भए शान्ति होस् भनी माग्न, आफुले साल भरी खेती गरी उब्जाएको अन्न पात फलफुल आदि लिनुहोस् भनी भन्ने सांस्कृतिक तथा धार्मिक मान्यता रहेछ।

निकासको पुजा सके पछि पोखरीको परिक्रमा गर्नु पर्ने रहेछ। ढ्याङग्रो बजाउँदै हिमाल पर्वत, ढुंगा, ओडार मा बस्ने देव-देवता भन्दै सबैलाई बक्साउदै धामी, झाँक्री नाच्दै पोखरी घुम्नु पर्ने रहेछ। पोखरीमा प्रत्यक्ष सर्प (नाग) देखिन्छ भन्दै हिड्दै हुनुहुन्थ्यो एक थामी चिया व्यापारी। अर्का एक दर्शनार्थीले “मैले देखे” पोखरीले दर्शन दिनुभो भनी दुवै हात जोडी विन्ती गर्दै हुनुहुन्थ्यो। पोखरी घुम्ने क्रममा हिड्दै जादा एक छेउमा पानी भित्र भुमरी खेल्ने रहेछ। सानो ढुंगाको कापभित्र बाहिर हुँदै फर-फर बालुवा भुमरी पर्ने हराउने, अन्त घुम्ने भेटिने, फेरी उत्रने दृश्य देखेपछि धुप चडाई अगाडि बढ्ने कार्य भयो। यसलाई पानी उम्लिएको र पोखरीले गरेको व्यवहार भनी विश्वास गर्ने चलन रहेछ। बौलाह पोखरीको एक छेउमा भिरालो परेर सुतेको चिप्लो शिला भएर जानु पर्ने एक बाटो छ। त्यहाँबाट चिप्ल्यो भने बाँच्न र बचाउन सकिने








उपाय छैन किन की त्यस शिलाको फेदमा पोखरीको गहिरो भाग पर्छ। केहि वर्ष पहिला एक जना दर्शनार्थीको मृत्यु त्यसै शिलाबाट चिप्लेर भयो भन्दै एक थामी बुढ्यौलीले बताउनु भयो। उक्त शिलाको अर्को छेउमा धन माग्ने, पशु माग्ने, धामी उतार्ने, बल वरदान माग्ने पुजा गर्ने ठाउँ रहेछ। पटुका, पगरी अथवा डोरीले ढुंगा बाँधेर हो..हो..हा.. भन्दै तान्नु पर्ने जन विश्वास रहेछ। आफ्नै लागि आफुले ढुंगा बाधेर त्यसो गर्नुपर्ने र धामी झाँक्रीले फलाक्नु पर्ने, बल, धन, वरदान, पशु आदि मागि दिनु पर्ने धार्मिक परम्परा रहेछ। फोटोमा भएको निज थामी धामी बल, वरदान माग्न बौलाह पोखरी आउनु भएको रहेछ। उहाँलाई वरदान, बल मागिदिनको लागि झाँक्री लिएर आउनु भएको रहेछ। पश्चिम तर्फ फर्केर मजबुत तरिकाले बसेको बौलाह पोखरीको अर्को कुनामा ठूलो अग्लो शिला उच्च स्थानमा बसेको छ। त्यस शिलालाई थामी भाषामा देवा भनिदोरहेछ। थामी धामी झाँक्रीले उक्त शिलालाई महत्वका साथ मानमनितो गरी पुजा गर्नु पर्ने पुरानो वा धामी, झाँक्री परम्परा भएको देखियो। देवामा कन्या केटीलाई कलश बोक्नलगाई धेरै समयसम्म पुजा आजा गर्ने प्रथा रहेछ। त्यसै ठाउँमा सबैजनाको आयु हेर्ने, सातो हेर्ने, विरामी भए शान्ती गर्ने, पितृहरुको आत्माहरु भए बोलाउने जस्ता धार्मिक कार्य गर्नु पर्ने रहेछ। यो कार्य सकिए पछि बौलाह पोखरीमा गरिने कार्य सकीएको हुने रहेछ।

त्यस पछि पुर्खा झाँक्रीको च्यान (कपुर) भएको केही पर बौलाह पोखरीको निकासको छेउमा सगुन राखेर धामी, झाँक्री बस्ने कार्य गर्नु पर्ने परम्परा रहेछ। त्यहाँ परापूर्व कालमा मरेको पुर्खा धामीको आत्मलाई सम्मान गरेपछि खाजा खाने व्यवस्था भयो। बौलाह पोखरीको निकास किनारमा माइखावा थामीले आजदेखि म चुरोट खान्न भनी प्रतिज्ञा गर्नुभयो। त्यसै समयमा धनबहादुर नेपाली आउनु भई कसरी आजभन्दा केहि वर्ष अघि बौलाह पोखरी आई सनाई बजाएर सन्तान माग्नु भएको अभिनय गर्नु भयो। यसरी नै सनाई बजाई बौलाह पोखरीसंग सन्तान पाउने चाहना भावपुर्ण व्यक्त गरेको थिए। पछि छोरा जन्मियो। बौलाह पोखरी साक्षत भगवान हुनुहुन्छ उहाँले भन्नुभयो।

स्वास्थ्यको लागि हानी गर्ने पदार्थबाट मुक्त हुनको लागि होस्, विन्ती बिसाएको कुरा सुनी दिने, हार-गुहार मागे परेको पिडा दुःख, शान्ति हुने, चिताएको कुरा पुरा गरिदिने जन विश्वासको लागि धार्मिक तथा सांस्कृतिक महत्वको बौलाह पोखरीलाई सेवा ढोक गरी उच्च हिमाली गोरेटो चढ्ने कार्य जारी राखियो। सुन्दर उच्च हिमाली वन्यजन्तु र वनस्पति प्रजाती विविधताको अवलोकन गर्दै देउ ढुंगा तर्फ दर्शनार्थीहरुको यात्रा अघि बढ्यो। पहाड, पाखा, पखेरा, भीर जस्ता भौगोलिक क्षेत्रमा ढेङ्ग्रो बजाउदै धामी, झाँक्री नाच्दै सुरिलो स्वरमा गीत गाउँदै अघि बढेका यात्रु तिब्बतका केहि भाग हुँदै फर्कनु पर्ने रहेछ।













सुनको पुम्पा जिताई ल्यायौं, चाँदिको पुम्पा जिताई ल्यायौ । कन्या केटीलाई जिताई ल्यायौं । बौलाह पोखरी कुण्डली माई रक्षा गर ! क्षमा गर ! भनी गीत गाउँदै फर्कनु पर्ने परम्परा रहेछ ।

उच्च हिमाली भेगमा पालिएको भेडा पालन व्यवसाय देखाइएको छ । राडी पाखी तयार गर्नको लागि आवश्यक पर्ने ऊनको उत्पादन यसै भेडाबाट उपलब्ध गरिन्छ । ऊन बाहेक दुध र घिउको लागि पनि भेडा पालन उच्च हिमाली महत्वपूर्ण हुने गर्दछ भनि एक थामी बृद्धले भन्नुभयो । ठाउँ-ठाउँमा बिसाउदै यात्रा अघि बढ्दै गयो ।

सिम-सिम परेको पानीसगै झपक्क साँझ भएकोले ओडार (गुफा) कहाँ पाइन्छ कि भनी नाङ्गो पहाड तिर बाटो छाडेर यताउती हेर्ने क्रममा सानो-सानो २ वटा ओडार पाइयो । ढुंगाको कापमा, ढुंगा माथि सुत्ने काम भयो । कोहि कता बसे । दोस्रो दिन सबेरै उठेर बाटो पैलाउने काम भयो र यात्रा फेरी देउ ढुंगा तर्फ लक्षित हुँदै अघि बढ्यो ।

देउढुंगा जाने क्रममा धार्मिक मान्यताका साथ बनाइएका मानेहरुको छेउमा आई धामी झाँक्रीहरु नाच्ने, वरिपरि रहेका देउ-देवताहरुलाई बल माग्नु पर्ने हुँदो रहेछ । बौलाह पोखरीबाट मागील्याएको वर-वरदान, सम्पति, धनको लक्ष्मी (सह) लाई सहयोग पुग्ने गरी बल माग्नु पर्ने रहेछ । राडी विच्छ्याई  धामी, झाँक्रीलाई सगुन राखी दिनुपर्ने चलन पाइयो । लय मिलाएर बौलाह पोखरीको गीत समुहगत रुपमा गाउने क्रम जारी रहेको पाइयो । त्यसरी धामी, झाँक्रीलाई अनुरोध गर्नुहुदो रहेछ । ग्रह-दशा हेर्नेक्रममा ढ्याङग्रोमा राखिएको अक्षता आफ्नो गुरु लाई देखाउदै हुनुहुन्छ धामी । जसले अक्षता राखेको हो उसले आफ्नो धार्मिक नाम (समेत) उमेर बताएपछि, राखिएको अक्षताद्वारा के-कस्तो ग्रह, दशा र भाग्य अथवा घटेको घट्ना हुन सक्ने कुराहरु धामी, झाँक्रीहरुले आफ्नो गुरु (देवता) संग सोधी बताइदिने गर्नु हुँदोरहेछ । ग्रह-दशा नराम्रो देखिएमा के धार्मिक कार्य गर्नु पर्दछ भनी बताईदिने पनि गर्नु हँदो रहेछ ।










बौलाह पोखरी कुण्डली माईको सम्झना गर्दै युवा-युवतीहरु प्राकृतिक सौन्दर्यले पुर्ण खुल्ला चौरमा नाच्दै रमाइरहेको दृश्यले बौलाह पोखरीको सांस्कृतिक महत्व देखिन्छ। उच्च हिमाली क्षेत्रमा जाँदा लाग्ने लेक र उकालो-ओरालो हिंडाईले थकित भएको नानी काखमा लिएर सून्दर प्राकृतिक दृश्य नियाल्दै थामी महिला उभिरहनु भएको थियो। सानो नानी काक्रामा बोकेर बौलाह पोखरी जाने परम्परा रहेछ। एक आपसमा भलाकुसारी गरिरहनु भएका महिलाहरु।

माने भन्ज्याङबाट सगुन खाइसकेपछि देउ ढुंगा झर्ने क्रम जारी रह्यो। घुमाउरो बाटो तर प्राकृतिक सुन्दरताले भरिपुर्ण देउ ढुंगा क्षेत्र। वनस्पति विविधता, वन्यजन्तु, हिमाली भेगमा पाइने पक्षीहरुको बासस्थान रहेको उक्त क्षेत्र जैविक विविधताको लागि अति महत्वको क्षेत्र रहेछ। घुमाउरो बाटो हुँदै धामी, झाँक्रीहरु नाच्दै गाउँदै देउ ढुंगा झर्ने रहेछ। अनुपम भौगोलिक क्षेत्रमा अवस्थित देउ ढुंगा धार्मिक तथा सांस्कृतिक महत्व माँनीदो रहेछ। एमनको ढुंगा पहाडको डिलमा अडिएर बसेको छ। माइखावा थामी उक्त ढुंगा तर्फ फर्केर भन्नुहुन्छ-



“हालसम्म यसको उत्पतिको बारेमा कसैलाई पनि थाहा छैन । हामी सानै छँदा पनि यस्तै थियो । अचम्म लाग्दो अवस्थामा अडिएर बसेको छ यो देउढुंगा । अलिकति हल्लिने हो भने हुत्त हुत्तिएर पल्टन सक्ने देखिन्छ तर आजसम्म सत्यले गर्दा होला जस्ताको त्यस्तै छ । हामी थामी धामी, झाँक्री संस्कृतिमा बडो महत्व राख्ने यस देउढुंगा बौलाह पोखरी पुगेर आउनै पर्दछ । बौलाह पोखरी गएर मागी ल्याएको सम्पूर्ण कुरा थामी, झाँक्रीहरुले यहाँ आएर बक्साउने काम गर्नुपर्ने हुन्छ ।”

यहाँ नआई बौलाह पोखरी गई गरेको धार्मिक कार्य पूरा नहुने विश्वास छ। धामी, झाँक्रीहरु यहाँ आएर आफुले बौलाह पोखरीमा गई गरेको काम सफल होस् भनी बल माग्ने परम्परा रहेको कुरा माइखावा कैले थामी बताउनुहुन्छ। त्यसै गरी धामी, झाँक्री विद्याको लागि बल-वरदान माग्ने गर्नुहुन्छ यस देउढुंगा आएर। पहिलाको कुरा सम्झदै कैले थामी भन्नुहुन्छ-

“पहिला यसैबाटो भएर भोट गई नुन बोकेर आउने चलन थियो । भरियाहरुले त्यसै समयमा यस देउढुंगामा भएको ओडारमा ढिडो पकाएर खाएछ रे । खाइसकेपछि सफा नगरी सुतेछ रे । सुतेकै समयमा निस्कने दुलो ठूलो ढुंगाको ढोका त्यहाँ भएका देवताहरुले लगाइ दिएछ रे । त्यसरी ढिडो खाएर सुतेका भरियाहरु त्यही थुनिएर मरेछ रे । त्यसपछि अझसम्म पनि उक्त ढोका खुलेको छैन । उनीहरुको आत्म यसै वरिपरि रहेकोले धामी झाँक्रीले उनीहरुलाई आई सम्झाउने,सम्मान गर्ने परम्परा रहेको छ ।”



भक्तजनहरुले उक्त देउढुंगाको भित्तामा कसले माथिल्लो भागसम्म घिउ पुऱ्याउन सक्ने भनी नौनी घिउ फ्याक्ने परम्परा रहेछ।

बौलाह पोखरी कुण्डली माई गई थकित हुन भएका थामी महिला तिर्थालु देउढुंगाको रमणीय प्राकृतिक तथा भौगोलिक अवस्थासँग आफ्नो भावना साट्दै हुनुहुन्छ। बौलाह पोखरी कुण्डली माई रक्षा गर ! क्षमा गर ! भन्दै स्वरमा स्वर मिलाउनु हुने धार्मिक तिर्थालु उहाँहरु लुकुनी (पाखी) पैरनमा हुनुहुन्छ। देउ ढुंगामा सातो, आयु, वल माग्नु पर्ने भए माग्ने चलन रहेछ। देउढुंगाको पूजा सकेपछि खाजा खाने परम्परा रहेछ।
















के युवा, के तन्नेरी बुढा बुढी सबैजना उत्साह उमँगका साथ बौलाह पोखरी धार्मिक तथा सांस्कृतिक यात्रा जाने, आउने परम्परा परापूर्व कालदेखि नै चलेको चलन रहेछ ।

धार्मिक, सांस्कृतिक तथा परम्पराले महत्वपुर्ण मानिएको देउढुंगाको पुजा सकेपछि, धामी, झाँक्रीहरु विगु हुँदै आलम्पु आइपुग्ने ध्येयले अघि बढ्यो । बाटोमा रहेका सीमसारहरुसंग सम्वन्धित खोला झरना आदिमा बस्दै धामी, झाँक्री पुजा गर्दै ढ्याङग्रो बजाउदै गीत गाउँदै विगु आइपुग्यो । झर्ने क्रममा आफन्तहरुले राखेको सगुन लिंदै धामी, झाँक्रीहरु सगुन खाई सकेपछि बौलाह पोखरी कुण्डली माई पुगी आयौ भन्ने गीत गाउँदै सगुन राख्ने परिवारलाई आशिर्वाद दिनु पर्ने चलन परम्परा रहेछ ।

बौलाह पोखरी कुण्डली माई आईपुग्यौ ! सुनको पुम्पा जिताई ल्यायौ ! चाँदिको पुम्पा जिताई ल्यायौ ! कन्या केटीलाई जिताई ल्यायौ से बोम्बो सै सै सै भन्दै आफ्नो पितृ देव-देवतालाई बोलाउदै पितृ घर आइपुगे पछि आँगनमा विछ्याएका राढीमा बस्दै धामी, झाँक्रीले घरमा भएका पितृहरुलाई बक्साउनु पर्ने धार्मिक परम्परा रहेको पाइयो ।

भावनात्मक रुपमा गाइएको उक्त बौलाह पोखरी कुण्डली माई पुगि आयौ भन्ने परम्पराले पितृ आत्महरुको गहिरो सम्बन्ध भएको देखाउछ । आँगनमा राखिएको सगुन खाएपछि कन्या केटीले लिएको (बोकेको) कलश (पुम्पा) देवता थान दियो, ढ्याङग्रो लिई झाँक्री, धामीले फलाक्दै नाच्दै, घुम्दै गीत गाउँदै भित्राउनु पर्ने चलन मार्मिक थियो । घर भित्र चुलो र छेउमा राखिएको देउता थानमा सबै कलश दियो राखी धामी, झाँक्रीले सम्पुर्ण सम्झाउनु, बताउनु पर्ने कार्य थालनी गर्नु पर्ने परम्परा रहेछ । सबै बृतान्त सकेपछि त्यसदिनको काम सकिने रहेछ । अर्को दिन विहानै देखि धामी, झाँक्री बसी सबै देव-देवता, कुल देवतालाई भनी कुखुराको पोथीको बली चढाउने धार्मिक मान्यता रहेछ । उक्त कुखुराको कलेजो र अण्डाको प्रसाद बनाई जो-जस्को सातो आउछ उनीहरुलाई बोलाएर झाँक्रीले आशिर्वाद सँगै उक्त पकुवा खान दिनु हुंदो रहेछ । झाँक्री गगन बहादुर थामी (गुरु) ज्यूले धार्मिक परम्परा र जैविक विविधताको अध्ययन गर्न आएको भनी मलाई पनि आशिर्वाद र पाकुवा प्रसाद दिनुभयो । पुजा सकेपछि सबै ढोले, झाँक्री, भरिया आफन्तहरुलाई खान पिन गराउनु पर्ने परम्परा रहेछ । पुजा सकेपछि मुल घर अथवा जस्को घरबाट बौलाह पोखरी जाने कार्य भएको छ पुजामा कोसेली लिएर आउने









आफन्तहरुलाई उनीहरुले ल्याउनुभएको शिशिमा रक्सी र एउटा मकैको घोगा अन्नको "सह" र प्रसादको रुपमा दिनु पर्ने, नआए बोलाएर भए पनि दिनु पर्ने सामाजिक परम्परा रहेछ ।

यसरी बौलाह पोखरी गई पुरा गरिएको भाकल, मागील्याएको अन्नको सह, वर-वरदान देउ ढुंगामा आई मागि ल्याएको सह सबैलाई बाँड्ने सामाजिक परम्पराले उनीहरुको एक आपसमा रहेको गहिरो सम्बन्ध देखाउँदछ । यस्तो धार्मिक संस्कार, समाजको सदभाव, मान्यता, भौगोलिक, जैविक सम्बन्ध सबै कुरा बौलाह पोखरीसँग रहेको देखाउँदछ । विना बौलाह पोखरी सामाजका हरेक कुरा अपुरो र अधुरो रहने पक्का उनीहरुको भनाइ र भावनात्मक व्यवहारले देखाउँछ ।

नङ र मासुको सम्बन्ध भएको सिमसार बौलाह पोखरी र थामी (थाङमी) समाज परम्परागत धर्मको धनी छ भन्नु राम्रो हुन्छ ।

## जैविक विविधता र संरक्षण :

प्राकृतिक भौगोलिक तथा धार्मिक परम्पराले पूर्ण मानिएको दोलखा जिल्ला जैविक विविधताले पनि धनी मानीएको जिल्ला मध्ये एक पर्न आउँछ । उष्ण सदावहार हावा पानीमा हुने वनस्पति तथा वन्यजन्तु देखि शीत मरुस्थलीय पर्यावरणमा पाइने जैविक विविधता यस जिल्लाको प्राकृतिक सम्पदा हुन् ।

लेकाली तृष्णभुमि देखि ५,000 मीटर भन्दा माथि उचाइसम्म फैलिएको आलम्पु गा.वि.स. अत्यन्तै चिसो हुने र ठाडो चट्टानी भीरहरुमा हुने काई, झ्याँउ, बास्नादार वनस्पति विविधता देखि कोण धारे, बाटुलो हुने खालको वनस्पति पनि पाइन्छ । यस गा.वि.स. मा चिलाउने घारी, कटुसे जंगल, सल्लाघारी अनेक प्रकारका गुराँस र त्यस्ता जंगलमा पाइने वन्यजन्तु, जडिबुटी, खोला, खोल्सीमा पाइने उभयचर, नवचर, जलचर आदि त्यस गा.वि.स को जैविक विविधता हुन् । आलम्पु गा.वि.स. स्रोत नक्सामा रेखाङकन गरे अनुसार उत्तरी क्षेत्रमा फैलिएको प्राकृतिक जंगल जैविक विविधताको दृष्टिले महत्वपुर्ण देखिन्छ । अध्ययन यात्राको क्रममा पाइएका विभिन्न जातका च्याउहरु र लह-लह परेर फुलेको जडीबुटी आदिले जैविक विविधता र संरक्षणको महत्व देखाउछ । ३ पोखरी वरिपरि पाइने गुराँसको प्रजाती, त्यहाँ वरिपरि पाइने सुनाखरी, जंगली फुल र त्यस क्षेत्रमा आश्रित भएर रहेको वन्यजन्तु आदिको अध्ययन र संरक्षण गर्नु आवश्यक देखिन्छ । त्यसै गरी बौलाह पोखरी वरिपरि पाउने बहुमुल्य जडीबुटी देखाउदै कैले थामी भन्नुहुन्छ । त्यहाँ नै पाइएको हिमाली च्याउ ।

माइखावा कैले थामी भन्नु हुन्छ-

> "यस्तो जडीबुटी थुप्रै पाइन्छ भन्नुभयो । आजभन्दा ६-७ वर्ष अघिसम्म त सेतो पानी हाँस यस बौलाह पोखरीमा खेली रहेको देखिन्थ्यो । यस बौलाह पोखरी र ३-पोखरी वरिपरि शिकार खेल्न, काटमार गर्न वा बली चढाउन नहुने धार्मिक चलन छ ।



देउढुंगा वरिपरि देखिएका जडिबुटी उक्त स्थानमा वरिपरि विविध प्रजाती भएका वनस्पति पाखा-पखेरा पाइन्छ। देउढुंगा वरिपरि पनि शिकार खेल्न, बली चढाउन नहुने कुरा माईखावा कैले थामीले बताउनु भयो। हाउ-घरको छेउ-छाउ पानी भइरहने क्षेत्रहरुमा रुख रोपी देवीस्थान बनाउने थामी समुदायको धार्मिक परम्पराले संरक्षणमा योगदान पुऱ्याएको पाइन्छ। सामुहिक छलफल कै क्रममा सहभागीहरुले बताए अनुसार त्यस क्षेत्रमा कस्तुर-मृग, भालु, चरी, बाघ, चितुवा, ब्वाँसो, खरायो, कालीज, मयूर, डाँफे, मुनाल, लाटोकोशेरो, हुचील पाइन्छ। त्यसै गरी गाउँघर नजिक भै बगेको खोलामा मिठो माछा र पाहाका प्रजातीहरु पनि पाइन्छ भन्नु भयो।









बौलाह पोखरीसंग सम्बन्धित धर्म, संस्कृति र संरक्षण बारे थामी भाषामा गाईएको गीत-

"निको देशेको आपा-आमा । तेते मुमी हुबुवु । नासाइनोका दिगोरे । बौलाह पोखरी कुण्डली माइको कारी । गाइको नामे सरन र कैले थामी आलम्पु-५, मादले टोल, दोलखा ।

बौलाह पोखरी कुण्डली माई, सत्यको देवा हादुङा, देशेमीको विश्वास सत्यको देवा थाना दि, का देशेको मि पाली काइ, आटा योङदु जेदवे चिगाप्ते पियो, दिनर्षीको दिभेरो, चिज्याङादु खाम्बे









चिगाप्ते पिया, नाङदेवा कोइ सेवा सेर्गेम, दिन दिनै पुगार लोङनुदु छो, पुर्णेए चलाइदु काजात्रो बौलाह पोखरी कुण्डली माई बास्काइते होदु तोदेवा, नाङदेवा साची ङ्गोतानाले छेमा लोङसे परमेश्वर रक्षा लोङ्गीसे परमेश्वर तोङको देवा दानाय दविती वी होदु सेकी आर्की मोविनबी होदु कस्तुरी माय छेमा लोङतोले चिमोते नाहो वन भरी वर्ष दिनको दिफेर निवाङिदु बेरेङ्गवे बौलाह पोखरी कुण्डली माई ।”

WWF Nepal acknowledges with gratitude the support received for the Freshwater Program from all our partners, donors and supporters:
Government of Nepal; Ministry of Forests and Soil Conservation (MFSC); Department of National Parks and Wildlife Conservation (DNPWC); Department of Forests (DoF); Department of Plant Resources; Water and Energy Commission Secretariat (WECS); WWF International; WWF UK; WWF US; WWF Netherlands; WWF Finland; WWF Sweden; Swedish International Development Cooperation Agency (SIDA); International Water Management Institute (IWMI); and Community Based Organizations

